| | | |
|---|---|---|
| पुस्तक | : | नेपाल परिचय |
| प्रकाशक | : | नेपाल सरकार<br>सञ्चार तथा सूचना प्रविधि मन्त्रालय<br>सूचना तथा प्रसारण विभाग<br>सञ्चारग्राम, तिलगङ्गा, काठमाडौँ, नेपाल ।<br>फोन नं. ४११२५५४, ४११२७१७<br>वेब : www.doinepal.gov.np |
| पूर्ण परिमार्जित संस्करण | : | २०६९ वैशाख |
| दोस्रो संस्करण | : | २०७० वैशाख |
| तेस्रो संस्करण | : | २०७२ वैशाख |
| चौथो संस्करण | : | २०७३ वैशाख |
| पाँचौ संस्करण | : | २०७४ वैशाख |
| परिमार्जित छैटौँ संस्करण | : | २०७५ वैशाख |
| परिमार्जित सातौँ संस्करण | : | २०७६ असार |
| परिमार्जित आठौँ संस्करण | : | २०७७ असार |
| परिमार्जित नवौँ संस्करण | : | २०७८ असार |
| सर्वाधिकार© | : | सूचना तथा प्रसारण विभाग |
| लेआउट डिजाइन | : | खगेन्द्र कार्की/सुवास राई<br>सूचना तथा प्रसारण विभाग |
| मुद्रक | : | मुद्रण विभाग |

# राष्ट्रिय गान

सयौं थुँगा फूलका हामी एउटै माला नेपाली
सार्वभौम भई फैलिएका मेची–महाकाली ।

प्रकृतिका कोटीकोटी सम्पदाको आँचल
वीरहरूका रगतले स्वतन्त्र र अटल

ज्ञानभूमि शान्तिभूमि तराई पहाड हिमाल
अखण्ड यो प्यारो हाम्रो मातृभूमि नेपाल

बहुल जाति भाषा धर्म संस्कृति छन् विशाल
अग्रगामी राष्ट्र हाम्रो जय जय नेपाल ।

# परिमार्जित नवौँ संस्करणबारे

नेपाल स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्तासम्पन्न, धर्मनिरपेक्ष, समावेशी, लोकतन्त्रात्मक, समाजवाद उन्मुख, सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक राज्य हो । नेपालमा बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधता रहेका छन् । यिनै विविधताले नै नेपाललाई विश्वमै पृथक एवम् मौलिक पहिचानका रूपमा स्थापित गरेको छ। विश्वमा नेपाल सगरमाथाको देश, भगवान गौतम बुद्धको देश, वीरहरूको देश, शान्तिको भूमि, मन्दिरै मन्दिरको देशका नामले पनि चिनिन्छ। विश्व सम्पदा सूचिमा नेपालका दश स्थान समावेश छन् । ती ऐतिहासिक, सांस्कृतिक, पर्यटकीय, राष्ट्रिय निकुञ्जअन्तर्गतका सम्पदा हुन् । नेपाल एक विविधताले भरिपूर्ण सुन्दर देश हो । नेपालमा हिमाल, पहाड र तराईको भौगोलिक सम्मिश्रण छ भने संस्कृतिमा पनि उत्तिकै विविधता छ, तथापि विविधतामा एकता छ । समयक्रमसँगै नेपालको राजनीतिक, प्रशासनिक, आर्थिक, सामाजिक आदि पक्षहरूमा परिवर्तन र सुधार हुँदै गएको र नेपालको स्वाधिनता, भौगोलिक अखण्डता र राष्ट्रिय एकता थप मजबुत भएकाले नागरिक हक हितको रक्षा मार्फत "समृद्ध नेपाल, सुखी नेपाली"को राष्ट्रिय आकाङ्क्षा हाँसिल गर्नमा योगदान पुगेको छ ।

नेपालको समग्र पक्षबारे जानकारी दिने उद्देश्यले तयार गरिएको नेपाल परिचय पुस्तकमा नेपालको भौगोलिक अवस्था, राजनीतिक र संवैधानिक विकास, वर्तमान शासन प्रणाली, प्रशासनिक व्यवस्था, आर्थिक व्यवस्था तथा विकासका प्रयास, विभिन्न जाति, भाषा, संस्कार र संस्कृतिलाई समावेश गरिएको छ। यस पुस्तकले नेपालको पूर्व मेचीदेखि पश्चिम महाकाली (महाकाली पारी नेपालको भूमी महाकाली नगरपालिका दोधारा चाँदनीसमेत) सम्म तथा उत्तर हिमालदेखि दक्षिण तराईसम्म र सातै प्रदेशका सबै विषयलाई सङक्षिप्तरूपमा समेटेको छ ।

पुस्तक प्रकाशनलाई निरन्तरता दिने क्रममा परिवर्तित सन्दर्भलाई सम्बोधन गर्ने गरी आधिकारिक तथ्य तथा प्रमाणमा आधारित रहेर सङ्घीयताको स्वरूप, हालको अर्थ व्यवस्था, नेपालको नयाँ नक्सासमेत समावेश गरिएको छ। प्रस्तुतिलाई सकेसम्म स्रोतमा आधारित बनाउँदै सरल, सटिक र सिलसिलेवार रुपमा प्रस्तुत गर्ने प्रयास गरिएको छ। यसले नेपालका सम्बन्धमा जानकारी राख्न चाहने स्वदेशी तथा विदेशी व्यक्तित्वहरूलाई महत्त्वपूर्ण सहयोग गर्नेछ भन्ने अभिलाषा लिएको छु। हालै विश्वव्यापी महामारीको रूपमा फैलिएको कोरोना रोगको प्रभाव नेपालको आर्थिक, सामाजिकलगायत सबै पक्षमा प्रत्यक्ष, अप्रत्यक्ष रूपमा प्रभाव पारेको छ ।

यस असहज परिस्थितिमा पनि नेपाल परिचय प्रकाशन गर्न सफल भएका छौँ। पुस्तकलाई स्तरीय र विश्वसनीय बनाउने प्रयास गर्दागर्दै पनि केही कमजोरीहरू रहेका हुन सक्छन्, ती कमीकमजोरीहरू र पाठकवर्गका अमूल्य सल्लाह, सुझावहरू उपलब्ध गराई यस पुस्तकको आगामी संस्करणलाई थप गुणस्तरीय बनाउन सबैबाट सहयोगको अपेक्षा गर्दछु।

यस संस्करणको "नेपाल परिचय" प्रकाशन गर्ने सिलसिलामा रचनात्मक सुझाव प्रदान गर्नुहुने माननीय सञ्चार तथा सूचना प्रविधि मन्त्री नयनकला थापाज्यू, सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सचिव श्रीमान् हरिप्रसाद बस्यालज्यूप्रति आभार प्रकट गर्दछु। पुस्तक तयार गर्ने सन्दर्भमा भाषा तथा विषयवस्तु सम्पादन गर्नुहुने पाठ्यक्रम विकास केन्द्रका निर्देशक गणेशप्रसाद भट्टराई, विभागका निर्देशकहरू भरत गौतम, सुदिप भट्टराई र सुमन बज्राचार्य, शाखा अधिकृतहरू लक्ष्मी दुरा, वसन्तबहादुर खत्री र केशवराज शर्मा, सुमन भट्टराई, इन्जिनियर मनिषा शर्मा, कृष्ण झा, नासु रञ्जना कुमारी दाहाल, लेखापाल संजय दाहाल, खरिदारहरू दिनेश पाण्डेय र बीरबहादुर सुनुवार, अधिकार बुढा, प्रेम प्रकाश केसीलगायत विभागका सम्पूर्ण कर्मचारीहरूलाई धन्यवाद दिन चाहन्छु। नेपाल परिचय पुस्तक तयारका लागि फोटो व्यवस्थापन गर्नुहुने छविकार प्रवीण श्रेष्ठ, कम्प्युटर सेटिङ्गसम्बन्धी कार्य गर्नुहुने कम्प्युटर अपरेटरहरू खगेन्द्र कार्की र सुवास राईलाई धन्यवाद दिन चाहन्छु। साथै समयमा नै पुस्तक छपाइ गरी उपलब्ध गराउने मुद्रण विभागलाई समेत धन्यवाद दिन चाहन्छु। धन्यवाद।

**गोगनबहादुर हमाल**
**महानिर्देशक**
**सूचना तथा प्रसारण विभाग**

## परिच्छेद : एक
## नेपालको भौगोलिक परिचय



## परिच्छेद : दुई
## नेपालको सङ्क्षिप्त ऐतिहासिक रूपरेखा

## परिच्छेद : तीन

## नेपालको संवैधानिक विकासक्रम

## परिच्छेद : चार



## परिच्छेद : पाँच

## परिच्छेद : छ
## नेपालको सामाजिक जीवन तथा संस्कृति



## परिच्छेद : सात
## नेपालको भाषा, साहित्य र कला

## परिच्छेद : आठ
## नेपालमा पूर्वाधार विकास

## परिच्छेद : नौ
## नेपालमा आमसञ्चार र पत्रकारिता



## परिच्छेद : दश
## नेपालको परराष्ट्र नीति र अन्तर्राष्ट्रिय सम्बन्ध



## परिच्छेद : एघार

परिच्छेद : एक

# नेपालको भौगोलिक परिचय

## १.१ भौगोलिक अवस्थिति

नेपाल दक्षिण एसियामा अवस्थित भूपरिवेष्ठित मुलुक हो। नेपाल २६ डिग्री २२ मिनेटदेखि ३० डिग्री २७ मिनेट उत्तरी अक्षांश र ८० डिग्री ४ मिनेटदेखि ८८ डिग्री १२ मिनेट पूर्वी देशान्तरसम्म फैलिएको छ। नेपालले विश्वको कुल भूभागको ०.०३ प्रतिशत, एसिया महादेशको ०.३ प्रतिशत र दक्षिण एसियाको २.८२ प्रतिशत भूभाग ओगटेको छ। नेपाल एसियाका दुई विशाल मुलुकहरू भारत र चीनको बिचमा पर्दछ। यो समुद्र/बङ्गालको खाडीदेखि करिब ११२७ कि.मि. टाढा छ। नेपालको क्षेत्रफल १,४७,१८१ वर्ग कि.मि. अर्थात ५६,८२७ वर्गमाइल छ। नेपालको पूर्व-पश्चिम लम्बाइ ८८५ कि.मि. र उत्तर दक्षिण चौडाइ सरदर १९३ कि.मि. छ। यसको दक्षिणमा भारतको विहार र उत्तर प्रदेश राज्य, पश्चिममा भारतको उत्तराखण्ड राज्य, पूर्वमा पश्चिम बङ्गाल, सिक्किम राज्य र उत्तरतर्फ चीनको स्वशासित क्षेत्र तिब्बत पर्दछ। नेपालको प्रमाणिक समय दोलखा जिल्लामा पर्ने गौरीशङ्कर हिमाललाई काटेर गएको ८६ डिग्री १५ मिनेट पूर्वी देशान्तरलाई आधार मानी निर्धारण गरिएको छ। नेपालको समय ग्रिनविच मानक समयभन्दा ५ घण्टा ४५ मिनेट छिटो छ। यो समय वि.सं. २०४२ साल वैशाख १ गतेदेखि लागु गरिएको हो। विश्वका ८,००० मिटरभन्दा अग्ला १४ चुचुरामध्ये नेपालमा आठओटा पर्दछन्। ६,००० मिटर र सोभन्दा अग्ला चुचुरा १,३०० भन्दा बढी छन्। मुस्ताङ इलाकामा मात्र यस्ता लगभग ३०१ चुचुराहरू रहेका छन्। नेपालमा हिमालयका साथसाथै कोसी, गण्डकी, कर्णालीजस्ता ठुला नदीहरू र रारा, फेवा, गोसाइँकुण्डजस्ता सुन्दर तालहरू छन्। भूस्वरूपको विविधताका साथै जलवायु र मौसमको अत्यधिक विभिन्नताले गर्दा ऊष्ण (Tropical), अर्धोष्ण (Mesothermal), सूक्ष्म तापीय (Micro thermal), टाइगा र टुन्द्रा प्रकारका जलवायु नेपालमा पाइन्छन्। नेपालको भौगोलिक भौतिक स्वरूपमा उचाइगत विविधताले भौगोलिक विभिन्नताको अवस्था सिर्जना गरेको छ। विश्व मानचित्रमा नेपाल सगरमाथाको देश, गौतम बुद्धको जन्मस्थल लुम्बिनीको देश र विशिष्ट झन्डाको देशको रूपमा समेत परिचित छ।

## १.२ भौगोलिक विभाजन

### १.२.१ धरातलीय स्वरूपको आधारमा नेपालको विभाजन

नेपालको भौगोलिक विभाजन विभिन्न आधारमा विभिन्न किसिमले गरिएको पाइन्छ । धरातलको आधारमा नेपालको भूभागलाई उत्तरदेखि दक्षिणसम्म क्रमशः तीन बृहत् प्रदेशमा विभाजन गर्न सकिन्छ ।

**तालिका नं. १.१**

**स्थानीय सरकार सञ्चालन ऐन, २०७४**
**(०७४ असोज २९ गते प्रमाणीकरण) अनुसार जिल्लाहरूको वर्गीकरण**

| | | |
|---|---|---|
| **हिमाली जिल्लाहरू** | ताप्लेजुङ, सङ्खुवासभा, सोलुखुम्बु, दोलखा, सिन्धुपाल्चोक, रसुवा, मनाङ, मुस्ताङ, डोल्पा, जुम्ला, मुगु, हुम्ला, कालिकोट, बाजुरा, बझाङ, दार्चुला, धादिङ, रामेछाप, गोर्खा, रुकुम (पूर्व), म्याग्दी (२०७५ मा पहाडीबाट हिमालीमा थपिएको) | २१ जिल्ला |
| **पहाडी जिल्लाहरू** | पाँचथर, इलाम, तेरथुम, धनकुटा, भोजपुर, ओखलढुङ्गा, खोटाङ, काभ्रेपलाञ्चोक, नुवाकोट लमजुङ, तनहुँ, कास्की, स्याङ्जा, पर्वत, बाग्लुङ, पाल्पा, अर्घाखाँची, गुल्मी, रुकुम (पश्चिम) रोल्पा, प्युठान, सल्यान, जाजरकोट, दैलेख, डोटी, अछाम, बैतडी, डडेलधुरा | २८ जिल्ला |
| **भित्री मधेसका जिल्लाहरू** | उदयपुर, मकवानपुर, चितवन, सिन्धुली, नवलपरासी (बर्दघाट सुस्तापूर्व), दाङ, सुर्खेत | ७ जिल्ला |
| **तराईका जिल्लाहरू** | झापा, मोरङ, सुनसरी, सप्तरी, सिरहा, धनुषा, महोत्तरी, सर्लाही, रौतहट, बारा, पर्सा, नवलपरासी (बर्दघाट सुस्तापश्चिम), रूपन्देही, कपिलवस्तु, बाँके, बर्दिया, कैलाली, कञ्चनपुर | १८ जिल्ला |
| **काठमाडौँ उपत्यकाका जिल्लाहरू** | काठमाडौँ, ललितपुर, भक्तपुर | ३ जिल्ला |

**(क) हिमाली प्रदेश**

नेपालको उत्तरी भेगमा हिउँ र चट्टानले निर्मित हिमाली क्षेत्रले नेपालको १५ प्रतिशत भूभाग समेटेको छ। करिब २५ देखि ५० किलोमिटर उत्तरदक्षिण चौडाइभित्र फैलिएको हिमाली प्रदेश समुद्र सतहदेखि करिब ३,००० मिटरमाथिको उचाइमा अवस्थित छ। हिमालय नेपालको उत्तरपट्टिमात्र नभई उत्तरी नेपाल सरहदबाट दक्षिणतिर हिमाली शृङ्खला देखिने नेपालका धेरै भूभागहरू छन्। जस्तैः अन्नपूर्ण र गङ्गापूर्ण हिमालको उत्तरपट्टि मनाङ, मुस्ताङ आदि नेपालका क्षेत्र पर्छन्। धवलागिरि चुरेन हिमालयको उत्तरमा मुस्ताङ तथा डोल्पाका भूभाग पर्छन्। ती क्षेत्रहरूबाट हिमालय दक्षिणतिर देखिन्छ। विश्वका उच्चतम र मनोरम हिमाली टाकुराहरू नेपालको हिमालयखण्डमा छन्। कञ्चनजङ्घा, जनक, उम्बक, महालङ्गुर, रोल्वालिङ, पुमरी, जुगल, लाङटाङ, गणेश, सेराङ, कुटाङ, मनसिरी, पेरी, लुगुला, दामोदर, निलगिरि, अन्नपूर्ण, धवलागिरि, मुस्ताङ, गौतम, पालचुङ हमगा, कान्जिरोवा, कान्ति, गोरखा, चाङ्गला, चण्डी, नालाकङ्कर, गुराँस पूर्वदेखि क्रमशः पश्चिमसम्म फैलिएका प्रसिद्ध २८ हिमशृङ्खलाहरू हुन्। यी शृङ्खलाहरू अधिकतम भोट (तिब्बत) का सीमावर्ती क्षेत्रमा रहेका छन्।

हिमाली क्षेत्रको आर्थिक गतिविधि सीमित छ। उब्जनी न्यून हुने हुँदा कृषि नगन्य भए पनि याक, भेडा, च्याङ्ग्रा, घोडा आदि पशुपालन र जडीबुटीमा यो क्षेत्र सम्पन्न छ। उनका गलैंचा, राडी, पाखी बुन्ने घरेलु उद्योगहरू रहेको पाइन्छ। पर्यटन उद्योग, जडीबुटी र पर्यावरण सम्पदा यहाँका महत्त्वपूर्ण स्रोत हुन्।

यो क्षेत्र अल्पाइन र आर्कटिक जलवायुक्षेत्रअन्तर्गत पर्छ। उचाइ र पर्वतको अवस्थितिअनुसार जलवायु फरक पर्छ। सोलुखुम्बुको ४,४०० मिटर उचाइमा रहेको चुङकुङ गाउँमा आलु फल्छ। २,८०० मिटर उचाइमा रहेको मुस्ताङको जोमसोममा दुई सय मिलिमिटर वर्षा हुन्छ। यस्ता उच्च हिमालका खेतीयोग्य जमिन सोलुखुम्बु, मनाङ, मुस्ताङ र डोल्पा जिल्लामा पाइन्छ।

करिब ५,००० मिटरमाथि ६ देखि १२ महिनासम्म हिउँ रहन्छ। लगभग ४,००० मिटरमाथिका भूभागमा छोटो अवधिको वर्षायाममा पनि तुसारापात हुन्छ। ४,०००-५,००० मिटरसम्म होचो झाङ झाडी (जडीबुटी) पाइन्छ। मुस्ताङ र डोल्पामा प्राकृतिक वनस्पति विशेष कारणले २,८०० मिटर उचाइसम्म पनि हुने गरेको पाइन्छ। करिब १२ प्रतिशत उच्च हिमाली क्षेत्र मनसुनी चरनका लागि उपयुक्त छ। अरू भूभाग ठाडो भिर, ढुङ्गे र ठन्डा हुँदा चरनका लागि उपयुक्त छैन। घाँस पुनः पलाउन समय लाग्ने भएकाले अधिक चरनबाट जोगाउन चरन व्यवस्थापन यहाँको मूल आवश्यकता हो। माटो र जलवायुका दृष्टिले एक प्रतिशतभन्दा कम जमिन मात्रै खेतीका लागि उपयुक्त छ। यातायातको आवश्यक व्यवस्था अझसम्म पनि हुन नसकेको कारण उत्पादनको बजारीकरण गर्न कठिनाइ हुने गरेको छ।

नेपालको लगभग १९.७ प्रतिशत (२,८९९,५०० हेक्टर) ओगट्ने उच्च पर्वतको दक्षिणमा मध्यपर्वत र उत्तरमा उच्च हिमाल पर्छ। यस क्षेत्रका सबैजसो मुख्य उपत्यका हिमानीग्रस्त (Glaciated) छन् । नदीले पिँध कटान बढी गरेको फलस्वरूप नदी ढलान (Gradient) ले गल्छेडा र गल्छी (Canyons) बनेका छन् । डाँडाको टुप्पो र उपत्यकाको फेदसम्म २,००० मिटरभन्दा बढी उचाइको भिन्नता छ । यसैले यहाँको एउटै ढलोमा ऊष्ण, ऊपोष्ण र न्यानो समशीतोष्ण एवम् चिसो शीतोष्ण बोटबिरुवा पाइन्छन् । यो क्षेत्रको ५० प्रतिशत भाग कुनै पनि खेतीका लागि काम लाग्दैन । बाँकी ५० प्रतिशत भूभागमध्ये ३४ प्रतिशत भूभागमा खेतीका लागि अपर्याप्त पातलो माटो छ भने १६ प्रतिशत भूभागले मात्र खेती धानेको छ । यस्तो २००,००० हेक्टर जमिनमा पनि ४० प्रतिशतमा मात्र राम्ररी खेती गर्ने गरिन्छ ।

हिमाली क्षेत्रमा नेपालका पूर्वदेखि क्रमशः ताप्लेजुङ, सङ्खुवासभा, सोलुखुम्बु, दोलखा, सिन्धुपाल्चोक, रसुवा, मनाङ, मुस्ताङ, डोल्पा, मुगु, हुम्ला, जुम्ला, कालिकोट, बाजुरा, बझाङ, दार्चुला धादिङ, रामेछाप, गोरखा र रुकुम (पूर्व) गरी २० जिल्ला पर्दछन् । हिमाली प्रदेशलाई निम्नलिखित तीन बृहत् क्षेत्रमा विभाजन गरी अध्ययन गर्न सकिन्छः

**मुख्य हिमाली क्षेत्र**



विश्वको सर्वोच्च शिखर सगरमाथा

हिमालयअन्तर्गतका उच्चतम चुलीहरू केन्द्रित मुख्य हिमालयमा ८,००० मिटरभन्दा अग्ला चुलीहरू पर्छन् । तटवर्ती हिमालयको दक्षिण रहेका बृहत्तर हिमाली शृङ्खलामा ६,००० मिटरभन्दा अग्ला १,३११ चुचुराहरू रहेका छन् । विश्वको सर्वोच्च शिखर सगरमाथा र तेस्रो उच्च हिमशिखर कञ्चनजङ्घाका अतिरिक्त ल्होत्से, मकालु, चो-ओयु, धवलागिरि, मनास्लु, अन्नपूर्णसमेत विश्वका दुई दर्जन चुलीमध्ये नेपालमा करिब डेढ दर्जन चुचुराहरू रहेका छन् । कञ्चनजङ्घा, खुम्बु, महालङ्गुर, रोल्वालिङ,



माछापुच्छ्रे हिमाल, गण्डकी

गणेश, गोरखा, अन्नपूर्ण, धवलागिरि, काञ्जिरोवा, अपी र सैपाल हिमशृङ्खलाअर्न्तगत विश्वका १० सर्वोच्च शिखरहरूमध्ये आठओटा हिमशिखरहरू पर्दछन् ।

**भित्री हिमाली क्षेत्र**

मुख्य हिमालयबाट उत्तर र तिब्बत तटवर्ती क्षेत्रबाट दक्षिणतिर यो क्षेत्र रहेको छ । नदी निर्मित उपत्यकाहरू उच्च हिमाली क्षेत्रमा निकै रहेका छन् । यहाँ पुराङ्ग, हुम्ला, मुगु, लाङगु, बुढी खोटाङ, केरुङ, न्यानम, रोङ्गसार, खुम्बु, कर्मा आदि हिमवेष्ठित उपत्यकाहरू छन् । उत्तरमा अग्ला हिमालय र दक्षिणमा होचा पर्वतका बिचमा रहेका यी उपत्यका २,४००-५,००० मिटरसम्मका उचाइमा रहेका छन् । कतैकतै गहिरो खोँच र बेँसी रहेका छन् । हुम्ला, जुम्ला, मुगु, डोल्पा, मुस्ताङ र मनाङ वृष्टिछायामा पर्ने हुँदा वर्षा ज्यादै कम हुन्छ । यस भेगमा शुष्क जलवायु पाइन्छ ।

यो पर्वतीय क्षेत्रमा चिसो शीतोष्ण कोणधारी वन हुने हुँदा डालेघाँस प्रायः पाइँदैन । यहाँका बासिन्दा खाद्यान्न, लुगा र अन्य सामानको ढुवानी खच्चर, घोडा, चौँरी आदि जनावरबाट गर्ने गर्दछन् । जौ, गहुँ, कोदो र आलु ३,००० मिटर उचाइसम्म फल्छ । हिउँदमा ठन्डा हुने हुँदा मानिसहरूको बसोबास यो क्षेत्रमा निकै पातलो छ ।

**सीमान्त हिमाली क्षेत्र**

यो अन्तरहिमाली शृङ्खला तिब्बतको समानान्तर किनारी क्षेत्र करिब १३० किलोमिटर उत्तरसम्म फैलिएको छ । सरदर ६,००० मिटर उचाइदेखि करिब ७,००० मिटरसम्म रहेको तिब्बती पठारको समस्थली क्षेत्र गङ्गा र साङ्ग पो (ब्रह्मपुत्र) को पानी ढलो क्षेत्रका रूपमा रहेको छ । उच्च हिमशृङ्खला छिचोली आएकाले यो क्षेत्रका नदी (कालीगण्डकी आदि) हिमालयभन्दा पुराना मानिन्छन् । मनाङ, मुस्ताङमा बस्ती छन् र भोट निस्कने भन्ज्याङहरू निकै पर्छन् । वृष्टिछायामा पर्ने भएकाले यो क्षेत्र मूलतः हिमाली मरुभूमिका रूपमा रहेको छ ।

**तालिका नं. १.२**

**नेपालका प्रमुख हिमशिखर र तिनको उचाइ**

| क्र. सं. | हिमशिखर | उचाइ (मिटर) | हिमशृङ्खला | जिल्ला/प्रदेश |
|---|---|---|---|---|
| १ | सगरमाथा | ८,८४८.८६ | खुम्बु/ महालङ्गुर | सोलुखुम्बु/१ |
| २ | कञ्चनजङ्घा | ८,५८६ | कञ्चनजङ्घा | ताप्लेजुङ/१ |
| ३ | ल्होत्से | ८,५१६ | खुम्बु/महालङ्गुर | सोलुखुम्बु/१ |
| ४ | मकालु | ८,४६३ | कुम्भकर्ण | सङ्खुवासभा/१ |
| ५ | चो ओयु | ८,२०१ | खुम्बु/महालङ्गुर | सोलुखुम्बु/१ |
| ६ | धवलागिरि | ८,१६७ | धवलागिरि | म्याग्दी/मुस्ताङ/गण्डकी |
| ७ | मनास्लु | ८,१६३ | गणेश | गोरखा/गण्डकी |
| ८ | अन्नपूर्ण | ८,०९१ | अन्नपूर्ण | कास्की/गण्डकी |
| ९ | नुप्से | ७,८५५ | खुम्बु | सोलुखुम्बु/१ |
| १० | शान्ति पिक | ७,५९१ | खुम्बु | सोलुखुम्बु/१ |
| ११ | लाङटाङ लिरुङ | ७,२३४ | लाङटाङ | रसुवा/३ |
| १२ | गणेश हिमाल | ७,१६३ | गणेश | गोरखा, धादिङ/३ |
| १३ | पुमोरी | ७,१६१ | खुम्बु/महालङ्गुर | सोलुखुम्बु/१ |
| १४ | गौरीशङ्कर | ७,१३४ | रोल्वालिङ | दोलखा/३ |
| १५ | अपी | ७,१३२ | गुराँस | दार्चुला/सुदुरपश्चिम |
| १६ | माछापुच्छ्रे | ६,९९३ | अन्नपूर्ण | कास्की/गण्डकी |
| १७ | सैपाल | ७,०३१ | अपि सैपाल | बझाङ/सुदुरपश्चिम |
| १८ | काञ्जीरोवा | ६,८८३ | काञ्जिरोवा | डोल्पा/कर्णाली |
| १९ | अमादब्लम | ६,८१२ | खुम्बु/महालङ्गुर | सोलुखुम्बु/१ |
| २० | जुगल (भैरव टाकुरा) | ६,५३५ | जुगल | सिन्धुपाल्चोक/३ |
| २१ | भृकुटी | ६,३६४ | दामोदर | मुस्ताङ/गण्डकी |

**(ख) पहाडी प्रदेश**

उत्तरमा हिमाल र दक्षिणमा तराईबिच रहेको मध्यभाग पूर्वदेखि पश्चिमसम्म अग्लाहोचा पहाडहरू, फराकिला-साँगुरा उपत्यका, दून, बेँसी तथा टार र गरायुक्त

पाखाहरूले घनीभूत छ । दक्षिणमा समुद्र सतहदेखि करिब ३०० मिटरदेखि उत्तरमा ३,००० मिटरसम्मका भूभागहरू ओगटेर ७६ किलोमिटरदेखि १२५ किलोमिटरसम्म चौडा भई विस्तारित भएका छन् । सबैभन्दा बढी भूभाग यस प्रदेशले ओगटेको हुँदा नेपाललाई पहाडी मुलुक पनि भनिन्छ । यस क्षेत्रमा इलाम, पाँचथर, तेह्रथुम, धनकुटा, भोजपुर, खोटाङ, ओखलढुङ्गा, काभ्रेपलाञ्चोक, नुवाकोट, तनहुँ, लमजुङ, कास्की, स्याङ्जा, पर्वत, पाल्पा, गुल्मी, अर्घाखाँची, म्याग्दी, बाग्लुङ, प्युठान, रोल्पा, रूकुम (पश्चिम), सल्यान, जाजरकोट, दैलेख, अछाम, डोटी, डडेलधुरा र बैतडी गरी २९ ओटा जिल्ला पर्दछन् ।

पहाडी प्रदेशलाई निम्न तीन श्रेणीमा विभाजन गर्न सकिन्छ :

**चुरे पर्वत श्रेणी**

नेपालको दक्षिणमा अवस्थित पूर्वदेखि पश्चिमसम्म फैलिएको हिमालय पर्वतमाला भन्दा निकैपछि विकसित रहेको समुद्र सतहदेखि ६१० देखि १८७२ मिटरको उचाइसम्म भएको पर्वतमालालाई चुरे पर्वत भनिन्छ । यसलाई सामान्यतः चुरिया वा चुरे पर्वत भनिन्छ ।

बाह्य हिमालय भनिने यो पर्वत शिवालिकको नामले समेत प्रसिद्ध छ । यो नवीनतम पर्वत हो । नेपालको पश्चिममा अग्लो र पूर्वमा होचो हुँदै बिलाएको चुरे महाकालीदेखि कोसीसम्म छुट्टै श्रेणी भएर फैलिएको छ । कोसीपूर्व थुम्कीको रूपमा मोरङ र झापाको उत्तरमा मैनाचुली, चुलाचुली छन् । चुरे पर्वत श्रेणीको धेरै भाग जङ्गलले ढाकेको छ । दाङ, देउखुरी, राप्ती, चितवन आदि उपत्यका दून अवोन्नत (Synclinal) प्रकृतिका भाग छन् । यहाँ तातो हावापानी पाइन्छ । यो क्षेत्रले १२.७ प्रतिशत (१,८७९,००० हेक्टर) ढाकेको छ । जलाधार क्षेत्रको उचाइ भिन्नता ७०० मिटरभन्दा कम छ । यहाँको माटो वर्षाको पानी थाम्न सक्ने खालको छैन । यो क्षेत्रमा ह्वात्त बाढी आएजस्तो वर्षामा खोलाहरू बग्छन् । वातावरणीय दृष्टिले चुरे पर्वत श्रेणी अत्यन्त संवेदनशील मानिएको छ ।

सतही ढुङ्गाले शिवालिक क्षेत्रको पर्वतीय भूभागलाई नियन्त्रण गरेको छ । यो शृङ्खला कमजोर एवम् अस्थिर छ । करिब ९३ प्रतिशतभन्दा बढी भूभाग ज्यादै ठाडो र अप्ठेरो भएकाले खेतीका लागि उपयुक्त छैन । शिवालिक क्षेत्रमा खेती हुन सक्ने जमिन करिब २४ प्रतिशत (५,२९,६०० हेक्टर) छ । दून ऊष्ण क्षेत्र भए पनि यहाँको माटो तराईभन्दा भिन्न छ । यो क्षेत्रमा फलफूल र तरकारी कमै हुन्छ । यस क्षेत्रमा अतिक्रमणले वनविनाश, भूक्षय र प्राकृतिक वातावरण खलबलिन पुगेको छ । शिवालिक क्षेत्रको दक्षिण एउटा लामो पेटी पूर्वदेखि पश्चिमसम्म फैलिएको छ । यो क्षेत्र बालुवा, कङ्कड, ढुङ्गा र खुकुला खस्रा पदार्थले बनेको छ । खुकुलो चट्टानले बनेको भाबरमा सालको वनजङ्गल पाइन्छ । गहिरो घाँटीमा नदीले थुपारेका माटाको भागले बनेका मैदानहरू गङ्गा मैदानकै अंशका रूपमा रहेका छन् ।

**महाभारत श्रेणी**

पूर्व-पश्चिम फैलिएको समुद्र सहतदेखि करिब १२,००० फिटसम्म उचाइको यो पहाडी भाग नेपालको महत्त्वपूर्ण भाग हो । यो भाग सेल, स्यान्डस्टोन, लाइमस्टोन, मार्बल, स्लेटजस्ता चट्टानयुक्त छ। ठुलाठुला चार नदी कडा चट्टाने पहाड छेडेर बगेका छन् । कर्णालीले चिसापानीमा, कालीगण्डकीले देवघाटमा, त्रिशूलीले जुगरीमा र कोसीले चतरामा छेडो बनाएको छ । होचो हिमालय (Lesser Himalaya) को नामले पनि यो पर्वत चिनिने गर्छ । यहाँको हावापानी रमणीय र स्वस्थ्यकर हुने हुँदा महाभारत पर्वत श्रेणीलाई नेपालको Hill-Station पनि भनिन्छ । सैलुङ्ग, ट्याम्के, जैथक, फूलचोकी, शिवपुरी, छिम्केश्वरी, दामन, स्वर्गद्वारी, साकिने डाँडा, खोँच आदि यहाँका प्रमुख शिखर हुन् । पूर्वी नेपालका तुलनामा पश्चिमको भाग बढी ठाडो छ ।

**मध्यभूमि श्रेणी**

महाभारत पर्वत श्रेणी र हिमालय पर्वत श्रेणीहरूका बिचमा रहेका ठुला-ठुला टार, बेंसी र उपत्यकाहरूलाई मध्यभूमी भनिन्छ। यसअन्तर्गत काठमाडौं, पोखरा, त्रिशुली, पाँचखाल, माडी जस्ता उपत्यकाहरू पर्दछन्। नेपालका चमेलिया (सुदूरपश्चिम), त्रिशूली (मध्य), सुनकोसी र अरुण तथा तमोर नदीद्वारा निर्मित ठुला उपत्यका एवम् समथर र उर्वरक्षेत्र मध्यभूमिअन्तर्गत पर्छन्। यहाँ तुम्लिङटार (सङ्खुवासभा), रुम्जाटार (ओखलढुङ्गा), बेल्टार (उदयपुर) मङ्गलटार (काभ्रेपलाञ्चोक),खुमलटार(ललितपुर),बट्टार(नुवाकोट),सल्यानटार(धादिङ),खैरेनीटार (तनहुँ), चौरजहारीटार (रुकुम) जरायोटार (भोजपुर), खरानीटार (नुवाकोट) जस्ता टार पनि छन् ।

मध्यपर्वतीय क्षेत्रले नेपालको २९.५ प्रतिशत (४,३५०,३०० हेक्टर) जमिन ढाकेको छ । यहाँको जलवायु वर्षैभिर कृषिका लागि उपयुक्त छ । तापक्रम न बढी न घटी मध्यम प्रकारको छ । जनसङ्या वृद्धिले गर्दा भूमिमाथि बढी चाप परेको छ । यहाँ ८७ प्रतिशत खेतीयोग्य भूमि पर्वतीय पाखाका रूपमा रहेका छन्। मध्यपहाडी भूमिको गराखेती प्रविधि नै स्थापित प्रविधि हो। कृषि, वन र वागबानीबाट यसलाई सघाउ हुनेगरेको छ ।

मध्यपहाडमा प्रिक्याम्ब्रियन (Precambraian), फाइलाइटस् (Phyllites), क्वार्टजाइटस् (Quartzites), अभ्रख, शिष्ट र ग्रेनाइट (Granite) जस्ता विविध चट्टान पाइन्छन्। मध्यपहाडको दक्षिण किनारामा प्रायः महाभारत लेकजस्ता उठेका (Uplifted) पर्वत छन् । यो भाग ऋतुक्षय भएका ग्रेनाइट, चुनढुङ्गा, डोलोमाइट, सेल, स्यान्डस्टोन, स्लेट र क्वार्टजाइटले बनेको छ। शिवालिक जस्तो भूक्षयको प्रभाव छैन। यस क्षेत्रका कडा चट्टान भूपाषाण भएका भाग ठाडो भिर (३५ डिग्री ढलोभन्दा बढी) र पातलो माटाले ढाकेको हुनाले खेतीका लागि उपयुक्त छैन ।

पहाडी प्रदेशमा किरात (राई, लिम्बू), तामाङ, मगर, गुरुङ, बाहुन, क्षेत्री, नेवार

आदि विभिन्न जातिका मानिसहरू बसोबास गर्छन् । पहाड आफैँमा विविधतायुक्त भएकाले यहाँको घर निर्माण, लवाइखवाइ, पेसा आदिमा भिन्नता पाइन्छ । फलफूल खेती र जडीबुटीका लागि बढी उपयुक्त वातावरण पाइन्छ । पहाडका दक्षिण पाखामा बस्ती र खेती धेरै भेटिन्छन् । यस भेकमा इलाम, धनकुटा, चैनपुर, भोजपुर, ओखलढुङ्गा, चरीकोट, बनेपा, काठमाडौँ, पोखरा, जुम्ला, सल्यान, सिलगढीजस्ता सानाठुला बस्ती छन् । पहाडी क्षेत्रको कुल बस्तीमध्ये १,००० मिटरसम्मको उचाइमा १६.३७ प्रतिशत, १००१-२,००० मिटरसम्ममा ५९.० ९ प्रतिशत र यसभन्दा माथि ३,००० मिटरसम्ममा १९.९९ प्रतिशत बस्तीहरू रहेको पाइन्छ । सर्वाधिक बस्तीहरू १००१-२००० मिटरसम्ममा केन्द्रित छन् ।

आर्थिक क्रियाकलापमा पहाडी क्षेत्र मूलतः फलफूल र खाद्यान्नका लागि उपयुक्त क्षेत्र हो । धान, मकै, गहुँ र गेडागुडीमा यो क्षेत्र विविधतायुक्त उत्पादनशील क्षेत्र भए पनि उर्वरभूमिको कमीले गर्दा खाद्यान्न अभाव हुने गर्दछ ।

**काठमाडौँ उपत्यका**

काठमाडौँ, ललितपुर र भक्तपुर गरी तीन जिल्लाहरू काठमाडौँ उपत्यकामा समावेश गरिएका छन् ।

**तालिका नं. १.३**

**पहाडी प्रदेशमा अवस्थित मुख्य उपत्यकाहरू**

| **उपत्यका** | **उचाइ (मी.)** | **जिल्ला** |
|---|---|---|
| काठमाडौँ | १३३७ | काठमाडौँ, ललितपुर र भक्तपुर |
| त्रिशूली | ५७९ | नुवाकोट |
| पोखरा | ८१९ | कास्की |
| पाँचखाल | ८७१ | काभ्रेपलाञ्चोक |
| बनेपा | १५५४ | काभ्रेपलाञ्चोक |
| पाटन | १५३४ | बैतडी |
| धुनिबेसी | ८५० | धादिङ |
| दाङ | ६६३ | दाङ |
| सुर्खेत | ६६४ | सुर्खेत |
| उदयपुर | ३६० | उदयपुर |

### (ग) तराई प्रदेश

पहाडी भागदेखि दक्षिणतर्फ भारतको सीमासम्म पूर्वपश्चिम फैलिएको नेपालको समतल भूभाग तराई प्रदेश हो । यसलाई मधेस पनि भनिन्छ । यस प्रदेशको चौडाइ २५

किलोमिटरदेखि ३० किलोमिटरसम्म छ । तराईको सिरान भाबर र चुरे हो । उत्तरबाट दक्षिणतिर होचो हुँदै जानु तराईको लक्षण हो । यो क्षेत्र ऊष्ण क्षेत्र हो । यहाँको जमिन प्रायः समथल छ । सन् १९६० सम्म यो क्षेत्रमा थारूहरूको बाहुल्य थियो । औलो उन्मुलनपछि दून उपत्यका पहाडलगायत अन्य क्षेत्रका जनताको पनि केन्द्रस्थल भई यो क्षेत्र बहुजातीय क्षेत्र बन्यो । समुद्रसतहबाट ६० देखि ६०० मिटरको उचाइमा रहेको छ । यसलाई नेपालको अन्नभण्डार पनि मानिन्छ । यस क्षेत्रअर्न्तगत झापा, मोरङ, सुनसरी, सप्तरी, सिराहा, धनुषा, महोत्तरी, सर्लाही, रौतहट, बारा, पर्सा, नवलपरासी (बर्दघाट सुस्ता पश्चिम), रूपन्देही, कपिलवस्तु, बाँके, बर्दिया, कैलाली र कञ्चनपुर गरी १८ जिल्लाहरू पर्दछन् । तराई प्रदेशलाई निम्न तीन श्रेणीमा विभाजन गर्न सकिन्छः

**खास तराई**

देशको दक्षिणी भागमा दक्षिणतर्फ होचिँदै गएको भूभागलाई खास तराई भनिन्छ । मिहीन पाँगो माटाले बनेको यो क्षेत्र उर्वर रहेको छ । चितवनको दक्षिणमा सोमेश्वर पर्वतमाला र देउखुरीको दक्षिणमा डुन्डुवा पर्वतमालाले काटेकाले खास तराईलाई तीन भाग (पूर्वी, मध्य र पश्चिम) मा बाँड्ने पनि गरिएको छ । झापा, मोरङ, सप्तरी, सिराहा, धनुषा, महोत्तरी, रौतहट, बारा, पर्साको दक्षिण, नवलपरासीको पश्चिम दक्षिण, रूपन्देही र कपिलवस्तुको दक्षिण र बाँके, बर्दिया, कैलाली र कञ्चनपुरको दक्षिणी क्षेत्रलाई नेपालको खास तराई भनिन्छ ।

**भावर क्षेत्र**

खास तराईको उत्तर र चुरे पर्वतमालाको दक्षिणमा समुद्रसतहदेखि ३८० मिटरको उचाइसम्म फैलिएको साँगुरो पेटीलाई भावर क्षेत्र भनिन्छ । ८ देखि १० माइलसम्म चौडाइ भएको भावर प्रदेशले मुलुकको कुल क्षेत्रफलको ४.५ प्रतिशत भूभाग ओगटेको छ ।

**भित्री मधेस**

चुरे र महाभारत पर्वत श्रेणीको बिचमा समुद्र सतहदेखि ६१० मिटरको उचाइसम्म चारैतिर पहाड पर्वतले घेरिई फैलिएका विशाल फाँटलाई भित्री मधेस वा दून क्षेत्र भनिन्छ । ३२ देखि ६४ कि.मि.सम्म लम्बाइ र १६ कि.मि. सम्म चौडाइ भएको यो क्षेत्रले मुलुकको कुल क्षेत्रफलको ८.५ प्रतिशत भूभाग समेटेको छ । भित्री मधेसलाई चार क्षेत्रमा बाँडिएको छ । यसमा उदयपुर र सिन्धुली उपत्यकालाई पूर्वी भित्रीमधेस; मकवानपुर, चितवन र नवलपरासी (बर्दघाट सुस्ता पूर्व)लाई मध्य भित्री मधेस; दाङ देउखुरीलाई पश्चिमी भित्री मधेस र सुर्खेत उपत्यकालाई मध्यपश्चिम भित्रीमधेस भनिन्छ ।

### १.२.२ नदीको आधारमा नेपालको विभाजन

**(क) कोसी क्षेत्र (प्रदेश)**

पूर्वमा कञ्चनजङ्घा हिमालदेखि पश्चिममा लाङटाङ हिमाल (गोसाइस्थान) बिचको

क्षेत्रलाई कोसी प्रदेश भनिन्छ । तमोर, अरुण, लिखू, दूधकोसी, तामाकोसी, सुनकोसी र इन्द्रावती मिलेर सप्तकोसी नदी बनेको छ । यो नेपालको सबैभन्दा ठुलो नदी हो । यो नदी ७२० कि.मि. लामो छ भने जलप्रवाह क्षमता औसत १,५६४ क्यूविक मिटर प्रति सेकेण्ड रहेको छ । यस नदीबाट २२,००० मेगावाटसम्म विद्युत् निकाल्न सकिने अनुमान गरिएको छ । कोसी प्रदेशको प्रभाव क्षेत्र झन्डै ६० हजार वर्ग कि.मि. रहेको छ । सप्तकोसी नदीको सबैभन्दा ठुलो सहायक नदी अरुण हो भने सबैभन्दा सानो नदी लिखु हो ।

(ख) **गण्डकी क्षेत्र** (**प्रदेश**)

पूर्वमा लाङटाङ हिमालदेखि पश्चिममा धवलागिरी हिमालसम्मको गण्डकी नदी प्रभावित क्षेत्रलाई गण्डकी प्रदेश भनिन्छ । गण्डकी नदीका सात प्रमुख सहायक नदीहरू त्रिशूली, बुढीगण्डकी, दरौदी, मादी, मर्स्याङ्दी, सेती र कालीगण्डकी हुन् । गाण्डव ऋषिको नामबाट नामकरण गरिएको मानिएको यस नदीलाई चितवन जिल्लामा आएपछि (देवघाटभन्दा तल) नारायणी नदीको नामले चिनिन्छ । यो नदी मध्यनेपालमा बग्दछ, जसको प्रवाह क्षेत्र करिब ३८,००० वर्ग कि.मि रहेको छ । करिब ३३८ कि.मि. लामो यस नदीको विद्युत् क्षमता करिब २१,००० मे.वा. रहेको मानिएको छ । यसका सहायक नदीहरूमध्ये कालीगण्डकी सबैभन्दा ठुलो र दरौँदी सबैभन्दा सानो हो । नेपालको सबैभन्दा गहिरो यो नदीले प्रतिसेकेण्ड औसत १७१३ क्यु.मि. पानी प्रवाह गर्दछ ।

(ग) **कर्णाली क्षेत्र** (**प्रदेश**)

पूर्वमा धवलागिरी हिमालदेखि पश्चिममा व्यास हिमालबिच कर्णाली नदी प्रभावित क्षेत्रलाई कर्णाली प्रदेश भनिन्छ । कर्णाली नदीका सात प्रमुख सहायक नदीहरू हुम्ला कर्णाली, मुगु कर्णाली, ठूली भेरी, सानी भेरी, तिला, बुढीगङ्गा र सेती नदी हुन् । यसलाई नेपालको सबैभन्दा लामो नदी पनि भनिन्छ । यो नदी भारतमा पुगेपछि घाघँरा र सरयू नामले समेत चिनिन्छ । यो नदी करिब ४२,००० व.कि.मि. क्षेत्रफल समेटेर बग्दछ । करिब ५०७ कि.मि. लामो यस नदीको विद्युत् उत्पादन क्षमता ३२,००० मे.वा.रहेको मानिएको छ । यो नदीको औषत जलप्रवाह क्षमता प्रतिसेकेन्ड १३१६ क्यु.मि. रहेको छ ।

### १.२.३ **हावापानीको आधारमा नेपालको विभाजन**

नेपालको हावापानीलाई भौगोलिक बनावट र उचाइको आधारमा पाँच प्रकारका हावापानीमा विभाजन गर्न सकिन्छ ।

(क) **ऊष्ण मनसुनी हावापानी (Sub Tropical Monsoon Climate)**

अर्धऊष्ण र उपोष्ण हावापानी भनिने यस्तो हावापानी नेपालको तराई, भावर, दुन र चुरे क्षेत्रको १,२०० मिटर (४,००० फिट) सम्मको उचाइमा पाइन्छ । ग्रीष्मयाममा यहाँको तापमान ३८ देखि ४२ डिग्री सेन्टिग्रेडसम्म पुग्दछ भने शीतकालमा १५ देखि

५ डिग्रीसम्म ओर्लिन्छ । वर्षा ऋतुमा हिन्द महासागरको बङ्गालको खाडीबाट आउने मनसुनी हावाले वर्षा गराउने गर्दछ । वर्षा सामान्यता पूर्वबाट पश्चिम घट्दै जाने र उत्तरबाट दक्षिण बढ्दै जाने भएबाट पूर्वी तराईभन्दा पश्चिमी तराई प्रदेशमा अधिक गर्मी हुन्छ । विषेशत भैरहवा, नेपालगञ्ज तथा कैलालीलगायतका तराई क्षेत्रमा अधिक गर्मी हुन्छ । यसैगरी दाङ, सुर्खेतजस्ता भित्री मधेसमा पनि गर्मी धेरै नै हुन्छ ।

**(ख) न्यानो समशीतोष्ण हावापानी (Warm Temperate Climate)**

चुरे पहाड र महाभारत पर्वतको १,२०० देखि २,१०० मिटर (४,०००-७,००० फिट) सम्मको उचाइमा पाइने यस प्रकारको हावापानीमा ग्रीष्म याममा न्यानो हुन्छ भने शिशिरमा बढी ठन्डा हुन्छ । ग्रीष्म ऋतुमा तापक्रम २४ देखि ३१° डिग्री सेन्टिग्रेडसम्म पुग्छ भने हिउदँमा ० डिग्री से. सम्म ओर्लिन्छ । नेपालमा पानी पार्ने मनसुनी हावा दक्षिणी भागबाट बग्ने हुँदा दक्षिणको भिरालो ठाउँमा २५० सेन्टिमिटरसम्म वर्षा हुन्छ भने उत्तरतर्फको भिरालो पाखामा १०० सेन्टिमिटरसम्म वर्षा हुन्छ ।

**(ग) ठन्डा समशीतोष्ण हावापानी (Cool Temperate Climate)**

महाभारत पर्वत शृङ्खलाको २,१०० देखि ३,३५० मिटर (७,०००-११,००० फिट) सम्मको उचाइमा पाइने यस्तो हावापानीमा ग्रीष्म ऋतुमा न्यानो हुन्छ भने हिउँदमा निकै जाडो हुन्छ । यहाँको तापक्रम ग्रीष्ममा १५° देखि २०° सेन्टिग्रेडसम्म पुग्दछ भने हिउँदमा ०° सेन्टिग्रेडसम्म ओर्लिन्छ । यहाँ वर्षमा १० सेन्टिमिटरसम्म पानी पर्दछ भने हिउँदमा हिउँ वर्षिन्छ । न्यून तापक्रम र न्यून वर्षाको कारणले यहाँ खेतीपाती अत्यन्तै कम हुन्छ । यहाँको जनजीवन कष्टकर भए पनि स्वास्थ्यको दृष्टिले यस्तो हावापानी उपयुक्त मानिन्छ ।

**(घ) लेकाली हावापानी (Alpine Climate)**

नेपालमा समुद्रसतहदेखि ३,३५० देखि ५,००० मिटर (११,०००-१६,००० फिट) उचाइसम्मको हिमाली क्षेत्रको ठन्डा हावापानीलाई लेकाली हावापानी भनिन्छ । यहाँको तापक्रम चैत, वैशाख, जेठमा १०° सेन्टिग्रेडसम्म पुग्दछ भने अरू समयमा (९ महिनाजति) ० डिग्री सेन्टिग्रेडभन्दा तल नै रहन्छ । यहाँ वर्षामा ३० मिलिमिटरसम्म वर्षा हुन्छ । यहाँ खेतीपाती हुँदैन, तर यहाँका ठुला हिमाली फाँटहरूमा पशुचरन गराइने हुँदा यो ठाउँ पशुपालन र पर्यटकीय गतिविधि सञ्चालनका लागि उपयुक्त छ ।

**(ङ) ध्रुवीय वा हिमाली हावापानी (Tundra Climate)**

हिमाली क्षेत्रको अत्यन्तै चिसो र शुष्क हावापानीलाई हिमाली, ध्रुवीय वा टुन्ड्रा हावापानी भनिन्छ । यहाँ सँधैजसो हिमपात भइरहन्छ भने वर्षाका रूपमा हिउँ नै पर्दछ । ५,००० हजार मी.(१६००० फिट) भन्दा माथिको भूभागको तापक्रम शून्य

डिग्री सेन्टिग्रेडभन्दा कम हुने हुँदा यहाँ मध्यान्हपछि हिउँको भीषण हुरी चल्दछ। यहाँको हावापानीलाई हिमाली मरूभूमि जलवायु पनि भन्ने गरिन्छ।

## १.३ **नेपालको राजनीतिक विभाजन** (**सङ्घ, प्रदेश र स्थानीय तह**)

### १.३.१ **सङ्घ**

सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपालको मूल संरचना सङ्घ, प्रदेश र स्थानीय तह गरी तीन तहको हुने व्यवस्था छ। सङ्घीय संरचनाको सबैभन्दा माथिल्लो एकाइको रूपमा रहने सङ्घीय तहलाई सङ्घका रूपमा परिभाषित गरिएको छ। सङ्घीय सरकारलाई नेपाल सरकारका नामले पनि चिनिन्छ। नेपालको संविधानले अनुसूची ५ मा सङ्घको अधिकारको सूचीको व्यवस्था गरेको छ। त्यस्तो अधिकारको प्रयोग संविधान र सङ्घीय कानुनबमोजिम हुने छ। त्यसैगरी अनुसूची ७ मा भएको साझा अधिकारको सुची  र अनुसूची ९ बमोजिमको सङ्घ, प्रदेश र स्थानीय तहको साझा अधिकार सुचीको प्रयोग पनि सङ्घ मार्फत हुने गर्दछ। साथै अविशिष्ट अधिकारको प्रयोग सङ्घीय सरकारले गर्ने व्यवस्था गरेको छ।

### १.३.२ **प्रदेश**

संविधान बमोजिम सङ्घीय एकाइमा विभाजन गरिएको नेपालको सङ्घीय एकाइको क्षेत्र र स्वरूपलाई प्रदेशका रूपमा परिभाषित गरिएको छ। नेपालको संविधानको अनुसूचि ४ बमोजिम ७ प्रदेश र सम्बन्धित प्रदेशमा रहने जिल्लाहरूको बारेमा स्पष्ट गरेको छ। जसअनुसार सात प्रदेशलाई निम्नबमोजिम सङ्क्षिप्त चर्चा गरिएको छ।

**प्रदेश नं** १

यस प्रदेशको पूर्वतर्फ भारतको पश्चिम बंगाल र सिक्किम राज्य, दक्षिणतर्फ बिहार राज्य, उत्तरतर्फ चीनको स्वशासित क्षेत्र तिब्बत तथा पश्चिमतर्फ प्रदेश नं २ र बागमती प्रदेश पर्दछन्। प्रदेश नं १ मा ताप्लेजुङ, पाँचथर, इलाम, सङ्खुवासभा, तेरथुम, धनकुटा, भोजपुर, खोटाङ, सोलुखुम्बु, ओखलढुङ्गा, उदयपुर, झापा, मोरङ र सुनसरी गरी १४ जिल्ला रहेका छन्। प्रदेश नं. १ को कुल क्षेत्रफल २५,९०५ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १७.६०%) रहेको छ। यस प्रदेशको ठुलो जिल्ला ताप्लेजुङ (३,६४६ व.कि.मि.) र सानो जिल्ला तेह्रथुम (६७९ व.कि.मि.) रहेका छन्। हाल यस प्रदेशको राजधानी विराटनगर (मोरङ) रहेको छ।

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा ९,९२,४४५ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या ४५,३४,९४३ (पुरुष २१,६६,५३६ र महिला २३,६८,४०७ रहेको छ। जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्य रूपमा ब्राह्मण, क्षेत्री, राई, लिम्बु, थारु, लेप्चा, तामाङ, गुरुङ, मेचे, कोचे, यादव, राजवंशीलगायतका जातिहरूको बसोबास रहेको छ भने नेपाली, मैथिली, किराती, तामाङ, लिम्बु, गुरुङ, लेप्चा, मगर र थारु भाषा मुख्य रूपमा बोलिन्छन्।

**प्रदेश नं. २**

यस प्रदेशको पूर्वतर्फ प्रदेश १, दक्षिणतर्फ भारत, उत्तरतर्फ प्रदेश १ र बागमती प्रदेश र पश्चिमतर्फ बागमती प्रदेश रहेका छन् । प्रदेश नं २ मा सप्तरी, सिराहा, धनुषा, महोत्तरी, सर्लाही, रौतहट, बारा र पर्सा गरी आठ जिल्लाहरू रहेका छन् । यस प्रदेशको कुल क्षेत्रफल ९,६६१ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको ६.५७%) रहेको छ । यस प्रदेशको ठुलो जिल्ला सप्तरी (१,३६३ व.कि.मि.) र सानो जिल्ला महोत्तरी (१,००२ व.कि.मि.) हुन् । यस प्रदेशको राजधानी जनकपुर (धनुषा) रहेको छ ।

यस प्रदेशमा कुल जनसङ्ख्या ५४,०४,१४५ छ, जसमा पुरुषको सङ्ख्या २७,१७,९३८ र महिलाको सङ्ख्या २६,८६,२०७ (स्रोत: केन्द्रीय तथ्याङ्क विभाग) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्यरूपमा यादव, गुप्ता, दास, थारु, राजवंशी, मुसलमान लगायतका जातिहरूको बसोबास रहेको छ, भने मैथिली, बज्जिका, अवधी, उर्दु, हिन्दी,थारु र नेपाली आदि भाषा बोलिन्छन् ।

**बागमती प्रदेश**

यस प्रदेशको पूर्वतर्फ प्रदेश १, पश्चिमतर्फ गण्डकी प्रदेश, उत्तरमा चीन र दक्षिणतर्फ प्रदेश २ र भारत रहेका छन् । बागमती प्रदेशमा दोलखा, रामेछाप, सिन्धुली, काभ्रेपलाञ्चोक, सिन्धुपाल्चोक, रसुवा, नुवाकोट, धादिङ, चितवन, मकवानपुर, भक्तपुर, ललितपुर, काठमाडौँ गरी १३ जिल्लाहरू रहेका छन् ।

यस प्रदेशको कुल क्षेत्रफल २०,३०० व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १३.७९%) । यस प्रदेशको ठुलो जिल्ला सिन्धुपाल्चोक (२,५४२ व.कि.मि.) र सानो जिल्ला भक्तपुर (११९ व.कि.मि.) रहेका छन् । यस प्रदेशको राजधानी हेटौंडा (मकवानपुर) रहेको छ ।

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा १२,७०,७९७ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या ५५,२९,४५२ (पुरुष २७,४७,६३३ जना र महिला २७,८१,८१९ जना) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्य रूपमा तामाङ, ब्राह्मण, क्षेत्री, नेवार लगायतका जातिहरूको बसोबास रहेको छ भने नेपाली, नेवारी, तामाङ भाषा मुख्य रूपमा बोलिन्छन् ।

**गण्डकी प्रदेश**

गण्डकी प्रदेशको पूर्वतर्फ बागमती प्रदेश, पश्चिमतर्फ कर्णाली प्रदेश र लुम्बिनी प्रदेश, उत्तरमा चीन र दक्षिणतर्फ लुम्बिनी प्रदेश र भारतको बिहार राज्यसँग सिमाना जोडिएको छ ।

गण्डकी प्रदेशमा गोरखा, लमजुङ, तनहुँ, कास्की, मनाङ, मुस्ताङ, पर्वत, स्याङ्जा, म्याग्दी, बाग्लुङ र नवलपरासी (बर्दघाट सुस्ता पूर्व) गरी ११ जिल्लाहरू रहेका छन् ।

यस प्रदेशको कुल क्षेत्रफल २१,७३३ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १४.६१%) रहेको छ । यस प्रदेशको ठुलो जिल्ला गोर्खा (३,६१० व.कि.मि.) र सानो जिल्ला पर्वत (४९४ व.कि.मि.) रहेका छन् । यस प्रदेशको राजधानी पोखरा (कास्की) रहेको छ ।

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा ५,७८,२१९ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या २४,०३,७५७ (पुरुष १०,९०,८०८ र महिला १३,१२,९४९ जना) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्यरूपमा ब्राह्मण, क्षेत्री, गुरुङ, मगर लगायतका जातिहरूको बसोबास रहेको छ भने नेपाली, गुरुङ, मगर भाषा मुख्य रूपमा बोलिन्छन् ।

**लुम्बिनी प्रदेश**

यस प्रदेशको पूर्वतर्फ गण्डकी प्रदेश, पश्चिमतर्फ कर्णाली प्रदेश र सुदूरपश्चिम प्रदेश उत्तरतर्फ गण्डकी प्रदेश र कर्णाली प्रदेश र दक्षिणतर्फ भारत पर्दछ ।

लुम्बिनी प्रदेशमा नवलपरासी (बर्दघाट सुस्ता पश्चिम), रूपन्देही, कपिलवस्तु, पाल्पा, अर्घाखाँची, गुल्मी, रुकुम (पूर्वी भाग), रोल्पा, प्युठान, दाङ, बाँके र बर्दिया गरी १२ जिल्लाहरू रहेका छन् । यस प्रदेशको कुल क्षेत्रफल २२,२८८ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १५.१४%) रहेको छ । यस प्रदेशको ठुलो जिल्ला दाङ (२,९५५ व.कि.मि.) र सानो जिल्ला नवलपरासी बर्दघाट सुस्ता पश्चिम (६३४.८८ व.कि.मि.) रहेका छन् । यस प्रदेशको राजधानी भालुवाङ (दाङ) रहेको छ

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा ८,८५,२०३ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या ४४,९९,२७२ (पुरुष २१,४०,३१६ र महिला २३,५८,९५६ जना) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्यरूपमा ब्राह्मण, क्षेत्री, मगर, थारु, तामाङ, नेपाल, मुसलमानलगायतका जातिहरूको बसोबास छ भने नेपाली, थारु, अवधि, भोजपुरी, उर्दु, मगर भाषा मुख्य रूपमा बोलिन्छन् ।

**कर्णाली प्रदेश**

कर्णाली प्रदेशको पूर्वतर्फ गण्डकी प्रदेश र लुम्बिनी पर्दछ । पश्चिमतर्फ सुदूरपश्चिम प्रदेश र चीन, उत्तरतर्फ चीन र दक्षिणतर्फ लुम्बिनी, सुदूरपश्चिम प्रदेश रहेको छ ।

कर्णाली प्रदेशमा रुकुम (पश्चिम), सल्यान, डोल्पा, जुम्ला, मुगु, हुम्ला, कालिकोट, जाजरकोट, दैलेख र सुर्खेत गरी १० जिल्लाहरू रहेका छन् ।

यस प्रदेशको कुल क्षेत्रफल २७,९८४ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १९.०१%) रहेको छ । यस प्रदेशको ठुलो जिल्ला डोल्पा (७,८८९ व.कि.मि.) र सानो जिल्ला रुकुम पश्चिम (१,२१३.४९ व.कि.मि.) रहेका छन् । यस प्रदेशको राजधानी वीरेन्द्रनगरको सुर्खेतमा रहेको छ ।

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा २,९८,३५९ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या १५,७०,४१८ (पुरुष ७,६७,९२३ र महिला ८,०२,४९५ जना) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्य रूपमा ब्राह्मण, ठकुरी, क्षेत्री, शेर्पा, गुरुङ, मगरलगायतका जातिहरूको बसोबास रहेको छ भने नेपाली, गुरुङ, मगर भाषा मुख्य रूपमा बोलिन्छन् ।

**सुदूरपश्चिम प्रदेश**

सुदूरपश्चिम प्रदेशको पूर्वतर्फ कर्णाली प्रदेश र लुम्बिनी प्रदेश, पश्चिमतर्फ भारत,

उत्तरतर्फ कर्णाली प्रदेश र चीन तथा दक्षिणतर्फ भारत पर्दछ ।

सुदूरपश्चिम प्रदेशमा बाजुरा, बझाङ, डोटी, अछाम, दार्चुला, बैतडी, डडेलधुरा, कञ्चनपुर र कैलाली गरी ९ जिल्लाहरू रहेका छन् । यस प्रदेशको कुल क्षेत्रफल १९,५३९ व.कि.मि. (नेपालको कुल क्षेत्रफलको १३.२८%) रहेको छ । यस प्रदेशको ठुलो जिल्ला बझाङ (३,४२२ व.कि.मि.) र सानो जिल्ला बैतडी (१,५१९ व.कि.मि.) रहेका छन् । यस प्रदेशको राजधानी गोदावरी (कैलाली) रहेको छ ।

केन्द्रीय तथ्याङ्क विभागका अनुसार यस प्रदेशमा ४,६९,९७१ परिवार सङ्ख्या छ भने कुल जनसङ्ख्या २५,५२,५१७ (पुरुष १२,५२,५१७ र महिला १३,३४,६३० जना) रहेको छ । जातीय तथा भाषिक विविधता रहेको यस प्रदेशमा मुख्य रूपमा ब्राह्मण, क्षेत्री, ठकुरी, थारु जातिहरूको बसोबास रहेको छ भने डोटेली, खस, थारु भाषा मुख्य रूपमा बोलिन्छन् ।

### १.३.३ नेपालका स्थानीय तह

नेपाल सरकारले नेपाललाई ७५३ स्थानीय तहमा विभाजन गरेको छ । जसअनुसार महानगरपालिका ६, उपमहानगरपालिका ११, नगरपालिका २७६ र गाउँपालिका ४६० रहेका छन् ।

**तालिका नं. १.४**
**महानगरपालिका**

| क्र. सं. | जिल्ला | महानगरपालिकाको नाम | जनसङ्ख्या | क्षेत्रफल (वर्ग कि.मि.) | वडा सङ्ख्या |
|---|---|---|---|---|---|
| १ | काठमाडौँ | काठमाडौँ | ९,७५,४५३ | ४९.४५ | ३२ |
| २ | ललितपुर | ललितपुर | २,८४,९२२ | ३६.१२ | २९ |
| ३ | कास्की | पोखरा | ४,१४,१४१ | ४६४.२४ | ३३ |
| ४ | चितवन | भरतपुर | २,८०,५०२ | ४३२.९५ | २९ |
| ५ | मोरङ | विराटनगर | २,१४,६६३ | ७७ | १९ |
| ६ | पर्सा | वीरगञ्ज | २,४०,९२२ | १३२.०७ | ३२ |

**तालिका नं. १.५**
**उपमहानगरपालिका**

| जिल्ला | क्र. सं. | उपमहानगरपालिकाको नाम | जनसङ्ख्या | क्षेत्रफल (वर्ग कि.मि.) | वडा सङ्ख्या |
|---|---|---|---|---|---|
| सुनसरी | १ | इटहरी | १,४०,५१७ | ९३.७८ | २० |
| | २ | धरान | १,३७,७०५ | १९२.३२ | २० |

| | | | | | |
|---|---|---|---|---|---|
| धनुषा | ३ | जनकपुर | १,५३,६१४ | ८५.९९ | २४ |
| मकवानपुर | ४ | हेटौंडा | १,५२,८७५ | २६१.५९ | १९ |
| बारा | ५ | कलैया | १,२३,६५९ | १०८.९४ | २७ |
| | ६ | जितपुर-सिमरा | १,१४,१८५ | ३०९.६७ | २३ |
| रूपन्देही | ७ | बुटवल | १,३८,७४२ | १०१.६१ | १९ |
| दाङ | ८ | तुलसीपुर | १,४१,५२८ | ३८४.६३ | १९ |
| | ९ | घोराही | १,५६,१६४ | ५२२.२१ | १९ |
| बाँके | १० | नेपालगन्ज | १,३८,९५१ | ८५.९४ | २३ |
| कैलाली | ११ | धनगढी | १,४७,७४१ | २६१.७५ | १९ |

**तालिका नं. १.६**

**नगरपालिका**

| जिल्ला | क्र.सं. | नगरपालिकाको नाम | जनसङ्ख्या | क्षेत्रफल (वर्ग कि.मि.) | वडा सङ्ख्या |
|---|---|---|---|---|---|
| ताप्लेजुङ | १ | फुङ्गलिन | २६४०६ | १२५.५७ | ११ |
| पाँचथर | २ | फिदिम | ४९२०१ | १९२.५ | १४ |
| इलाम | ३ | इलाम | ४८५३६ | १७३.३२ | १२ |
| | ४ | देउमाई | ३२९२७ | १९१.६३ | ९ |
| | ५ | माई | ३२५७६ | २४६.११ | १० |
| | ६ | सूर्योदय | ५६६९१ | २५२.५२ | १४ |
| झापा | ७ | मेचीनगर | १११७९७ | १९२.८५ | १५ |
| | ८ | दमक | ७५१०२ | ७०.८६ | १० |
| | ९ | कन्काई | ४०१४१ | ८०.९८ | ९ |
| | १० | भद्रपुर | ६५५४३ | ९६.३५ | १० |
| | ११ | अर्जुनधारा | ६०२०४ | १०९.८६ | ११ |
| | १२ | शिवसताक्षी | ६४५९६ | १४५.८७ | ११ |
| | १३ | गौरादह | ५३०३३ | १४९.८६ | ९ |
| | १४ | विर्तामोड | ८१८७८ | ७८.२४ | १० |
| मोरङ | १५ | बेलबारी | ६५८९२ | १३२.७९ | ११ |
| | १६ | लेटाङ | ३२०५३ | ११९.२३ | ९ |
| | १७ | पथरी शनिश्चरे | ६२४४० | ७९.८१ | १० |
| | १८ | रङ्गेली | ५२०१३ | १११.७८ | ९ |

| | | | | | |
|---|---|---|---|---|---|
| | १९ | रतुवामाई | ५५३८० | १४२.१५ | १० |
| | २० | सुनवर्षी | ५०७५८ | १०६.४ | ९ |
| | २१ | उर्लाबारी | ५४६९६ | ७४.६२ | ९ |
| | २२ | सुन्दरहरैंचा | ८०५१८ | ११०.१६ | १२ |
| सुनसरी | २३ | इनरुवा | ६३५९३ | ७७.९२ | १० |
| | २४ | दुहवी | ५६२६९ | ७६.६७ | १२ |
| | २५ | रामधुनी | ५१७५२ | ९१.६९ | ९ |
| | २६ | बराह | ७७४०८ | २२२.०९ | ११ |
| धनकुटा | २७ | पाख्रिबास | २२०७८ | १४४.२९ | १० |
| | २८ | धनकुटा | ३६६१९ | १११ | १० |
| | २९ | महालक्ष्मी | २४८०० | १२९.३९ | ९ |
| तेह्रथुम | ३० | म्याङ्लुङ | १९६५९ | १००.२१ | १० |
| | ३१ | लालीगुराँस | १६९७० | ९०.२७ | ९ |
| सङ्खुवासभा | ३२ | चैनपुर | २७३०८ | २२३.६९ | ११ |
| | ३३ | धर्मदेवी | १८२३५ | १३२.८२ | ९ |
| | ३४ | खाँदबारी | ३११७७ | १२२.७८ | ११ |
| | ३५ | मादी | १४४७० | ११०.१ | ९ |
| | ३६ | पाँचखपन | १७५२१ | १४८.०३ | ९ |
| भोजपुर | ३७ | भोजपुर | २७२०७ | १५९.५१ | १२ |
| | ३८ | षडानन्द | ३१६१० | २४१.१५ | १४ |
| सोलुखुम्बु | ३९ | सोलुदूधकुण्ड | २०३९९ | ५३८.०९ | १० |
| ओखलढुङ्गा | ४० | सिद्धिचरण | २८३७४ | १६७.८८ | १२ |
| खोटाङ | ४१ | हलेसीतुवाचुङ | २९५३२ | २८०.१७ | ११ |
| | ४२ | दिक्तेल रूपाकोट मझुवागढी | ४६९०३ | २४६.५१ | १५ |
| उदयपुर | ४३ | कटारी | ५६१४६ | ४२४.८९ | १४ |
| | ४४ | चौदण्डीगढी | ४८५७४ | २८३.७८ | १० |
| | ४५ | त्रियुगा | ८७५५७ | ५४७.४३ | १६ |
| | ४६ | वेलका | ४२३८६ | ३४४.७३ | ९ |

| | | | | | |
|---|---|---|---|---|---|
| सप्तरी | ४७ | राजविराज | ६७२६२ | ५२ | १५ |
| | ४८ | कञ्चनरूप | ३५८९८ | १४३.३३ | १२ |
| | ४९ | डाक्नेश्वरी | ४९७८८ | ७७.८३ | ११ |
| | ५० | बोदेबरसाइन | ६५०४८ | ९१.९७ | १६ |
| | ५१ | खडक | ४५३६७ | ९६.७७ | ११ |
| | ५२ | शम्भुनाथ | ३३०१२ | ९९.९९ | ११ |
| | ५३ | सुरुङ्गा | ४४२२१ | १०७.०४ | ११ |
| | ५४ | हनुमाननगर कङ्कालिनी | ४५७३४ | ११८.१९ | १४ |
| | ५५ | सप्तकोसी | २११३१ | ६०.२५ | ११ |
| सिराहा | ५६ | लहान | ९१७६६ | १६७.१७ | २४ |
| | ५७ | धनगढीमाई | ४७४४९ | १५९.५१ | १४ |
| | ५८ | सिरहा | ८२५३१ | ९४.२ | २२ |
| | ५९ | गोलबजार | ५२१३७ | १११.९४ | १३ |
| | ६० | मिर्चैया | ५००७९ | ९१.९७ | १२ |
| | ६१ | कल्याणपुर | ४९२८८ | ७६.८१ | १२ |
| | ६२ | कर्जन्हा | ३०९६५ | ७६.८४ | ११ |
| | ६३ | सुखिपुर | ३७५९२ | ५४.७८ | १० |
| धनुषा | ६४ | क्षिरेश्वरनाथ | ४७४५३ | ६०.३९ | ११ |
| | ६५ | गणेशमान चारनाथ | ३७३०० | २४४.३१ | ११ |
| | ६६ | धनुषा धाम | ४५६६५ | ९१.६४ | ९ |
| | ६७ | नगराइन | ४७६२८ | ४९.१९ | १० |
| | ६८ | विदेह | ३८८७७ | ५२.६७ | १० |
| | ६९ | मिथिला | ४१०३० | १८१.९० | १० |
| | ७० | सहिदनगर | ४३७७० | ५७.३७ | ९ |
| | ७१ | सबैला | ४५८७९ | ६४.४७ | १३ |
| | ७२ | कमला | | ६५.८५ | ९ |
| | ७३ | मिथिला विहारी | ३३५२१ | ३७.६ | १० |
| | ७४ | हंसपुर | ३९१४५ | ४८.७१ | ९ |

| | | | | | |
|---|---|---|---|---|---|
| महोत्तरी | ७५ | जलेश्वर | ५८५४९ | ४४.२६ | १२ |
| | ७६ | बर्दिबास | ६३९१२ | ३१५.५७ | १३ |
| | ७७ | गौशाला | ६६६७३ | १४४.७३ | १२ |
| | ७८ | लोहरपट्टी | ३९५७९ | ५०.०६ | ९ |
| | ७९ | रामगोपालपुर | २९६१२ | ३९.५४ | ९ |
| | ८० | मनरा शिसवा | ४९६९२ | ४९.७३ | १० |
| | ८१ | मटिहानी | ३१०२६ | २९.०२ | ९ |
| | ८२ | भँगाहा | ४६७५४ | ७७.२१ | ९ |
| | ८३ | बलवा | ४२३४१ | ४४.०७ | ११ |
| | ८४ | औरही | ३१७५१ | ३५.७६ | ९ |
| सर्लाही | ८५ | ईश्वरपुर | ५९९८६ | १६३.८३ | १५ |
| | ८६ | मलङ्गवा | ४६५१६ | ३०.४४ | १२ |
| | ८७ | लालबन्दी | ५९३९५ | २३८.५ | १७ |
| | ८८ | हरिपुर | ४४३४२ | ७३.४५ | १० |
| | ८९ | हरिपूर्वा | ५१३५५ | ४६.९५ | ११ |
| | ९० | हरिवन | ४३९२४ | ८६.१२ | ११ |
| | ९१ | वरहथवा | ६९८२२ | १०७.०५ | १८ |
| | ९२ | बलरा | ४९४५२ | ५२.१ | १२ |
| | ९३ | गोडैटा | ४३४२९ | ४५.०७ | ११ |
| | ९४ | बाग्मती | ४०३९९ | १०१.१८ | १० |
| | ९५ | कविलाशी | ४२३३६ | ४८.११ | १० |
| सिन्धुली | ९६ | कमलामाई | ६५०६४ | ४८२.५७ | १४ |
| | ९७ | दुधौली | ६५३०२ | ३९०.३९ | १४ |
| रामेछाप | ९८ | मन्थली | ४५४१६ | २११.७८ | १४ |
| | ९९ | रामेछाप | २८६१२ | २०२.४५ | ९ |
| दोलखा | १०० | जिरी | १५५१५ | २११.२७ | ९ |
| | १०१ | भीमेश्वर | ३२४८० | १३२.५ | ९ |
| सिन्धुपाल्चोक | १०२ | चौतरा साँगाचोकगढी | ४६५०१ | १६५.२५ | १४ |
| | १०३ | बाह्रबीसे | २६७०० | ९६.७३ | ९ |
| | १०४ | मेलम्ची | ४५३४३ | १५८.१७ | १३ |

| | | | | | |
|---|---|---|---|---|---|
| काभ्रेपलाञ्चोक | १०५ | धुलिखेल | ३२१६२ | ५५ | १२ |
| | १०६ | बनेपा | ५५६२८ | ५५ | १४ |
| | १०७ | पनौती | ४६५९५ | ११८ | १२ |
| | १०८ | पाँचखाल | ३७९९७ | १०३ | १३ |
| | १०९ | नमोबुद्ध | २९५१९ | १०२ | ११ |
| | ११० | मन्डनदेउपुर | ३२६५९ | ८९ | १२ |
| ललितपुर | १११ | गोदावरी | ७८३०१ | ९६.११ | १४ |
| | ११२ | महालक्ष्मी | ६२१७२ | २६.५१ | १० |
| भक्तपुर | ११३ | चाँगुनारायण | ५५४३० | ६२.९८ | ९ |
| | ११४ | भक्तपुर | ८१७२८ | ६.८९ | १० |
| | ११५ | मध्यपुर थिमी | ८३०३६ | ११.४७ | ९ |
| | ११६ | सूर्यविनायक | ७८४९० | ४२.४५ | १० |
| काठमाडौं | ११७ | कागेश्वरी मनोहरा | ६०२३७ | २७.३८ | १२ |
| | ११८ | कीर्तिपुर | ६५६०२ | १४.७६ | १० |
| | ११९ | गोकर्णेश्वर | १०७३५१ | ५८.५ | ९ |
| | १२० | चन्द्रागिरि | ८५१९८ | ४३.९२ | १५ |
| | १२१ | टोखा | ९९०३२ | १७.११ | ११ |
| | १२२ | तारकेश्वर | ८१४४३ | ५४.९५ | ११ |
| | १२३ | दक्षिणकाली | २४२९६ | ४२.८६ | ९ |
| | १२४ | नागार्जुन | ६७४२० | २९.८५ | १० |
| | १२५ | बुढानिलकण्ठ | १०७९१८ | ३४.८ | १३ |
| | १२६ | शङ्करापुर | २५३३८ | ६०.२१ | ९ |
| नुवाकोट | १२७ | विदुर | ५४३५१ | १३०.०१ | १३ |
| | १२८ | बेलकोटगढी | ३९८८८ | १५५.६ | १३ |
| धादिङ | १२९ | धुनिबेँसी | ३१०२९ | ९६.३ | ९ |
| | १३० | नीलकण्ठ | ५८५१५ | १९७.७ | १४ |
| मकवानपुर | १३१ | थाहा | ४१६२३ | १९१.१२ | १२ |
| रौतहट | १३२ | चन्द्रपुर | ७२०५८ | २४९.९६ | १० |
| | १३३ | गरुडा | ५०४८१ | ४४.४६ | ९ |
| | १३४ | गौर | ६८४७६ | ५१.३ | १३ |
| | १३५ | बौधिमाई | ३६२६५ | ३५.३४३ | ९ |
| | १३६ | वृन्दावन | ४२७३५ | ९५.४ | ९ |

| | | | | | |
|---|---|---|---|---|---|
| | १३७ | देवाही गोनाही | ३२१४३ | ३३.९९ | ९ |
| | १३८ | गढीमाई | ४०४१० | ४९.४४ | ९ |
| | १३९ | गुजरा | ४६५९२ | १५०.३३ | ९ |
| | १४० | कटहरिया | ३८४१३ | ४०.६९ | ९ |
| | १४१ | माधवनारायण | ३५१७५ | ४८.५३ | ९ |
| | १४२ | मौलापुर | २६४३१ | ३४.७५ | ९ |
| | १४३ | फतुवाविजयपुर | ३६५३३ | ६५.२४ | ११ |
| | १४४ | इशनाथ | ४१४३५ | ३५.१७ | ९ |
| | १४५ | परोहा | ३७४५३ | ३७.४५ | ९ |
| | १४६ | राजपुर | | | |
| | १४७ | राजदेवी | ३१२९२ | २८.२१ | ९ |
| बारा | १४८ | कोल्हवी | ४३०३६ | १५७.४ | ११ |
| | १४९ | निजगढ | ३५३३५ | २८९.४३ | १३ |
| | १५० | महागढीमाई | ५४४७४ | ५५.३२ | ११ |
| | १५१ | सिम्रौनगढ | ४९९३९ | ४२.६५ | ११ |
| | १५२ | पचरौता | ३४१७५ | ४४.०१ | ११ |
| पर्सा | १५३ | पोखरिया | ५५३३८ | ५६.८१ | ११ |
| | १५४ | वहुदरमाई | ३९६७३ | ३१.५५ | ९ |
| | १५५ | पर्सागढी | ६८०६७ | ९९.९६ | ९ |
| चितवन | १५६ | कालिका | ४१४४२ | १४९.०८ | ११ |
| | १५७ | खैरहनी | ५६०९४ | ८५.५५ | १३ |
| | १५८ | माडी | ३७६८३ | २१८.२४ | ९ |
| | १५९ | रत्ननगर | ६९८४८ | ६८.६८ | १६ |
| | १६० | राप्ती | ५७१०७ | २१२.३१ | १३ |
| गोरखा | १६१ | गोरखा | ४९२७२ | १३१.८६ | १४ |
| | १६२ | पालुङ्टार | ३८१७४ | १५८.६२ | १० |
| लमजुङ | १६३ | बेसीसहर | ३९३५६ | १२७.६४ | ११ |
| | १६४ | मध्यनेपाल | २३३८५ | ११३.८६ | १० |
| | १६५ | राइनाश | १८५२७ | ७१.९७ | १० |
| | १६६ | सुन्दरबजार | २६८६१ | ७२.०५ | ११ |

| | | | | | |
|---|---|---|---|---|---|
| तनहुँ | १६७ | भानु | ४५७९२ | १८४ | १३ |
| | १६८ | भिमाद | ३१३६२ | १२९ | ९ |
| | १६९ | व्यास | ७०३३५ | २४८ | १४ |
| | १७० | शुक्लागण्डकी | ४८४५६ | १६५ | १२ |
| स्याङ्जा | १७१ | गल्याङ | ३६९६७ | १२२.७१ | ११ |
| | १७२ | चापाकोट | २६०४२ | १२०.५९ | १० |
| | १७३ | पुतलीबजार | ४४८७६ | १४७.२१ | १४ |
| | १७४ | भिरकोट | २५५८३ | ७८.२३ | ९ |
| | १७५ | वालिङ | ५११४३ | १२८.४० | १४ |
| म्याग्दी | १७६ | बेनी | ३३४९८ | ७६.५७ | १० |
| पर्वत | १७८ | कुस्मा | ३९६०० | ९३.१८ | १४ |
| | १७८ | फलेवास | २४६८७ | ८५.७ | ११ |
| बागलुङ | १७९ | बागलुङ | ५७८२३ | ९८.०१ | १४ |
| | १८० | गलकोट | ३३०९७ | १९४.३९ | ११ |
| | १८१ | जैमिनी | ३१४३० | ११८.७१ | १० |
| | १८२ | ढोरपाटन | २६२१५ | २२२.८५ | ९ |
| गुल्मी | १८३ | मुसिकोट | ३२८०२ | ११४.७४ | ९ |
| | १८४ | रेसुङ्गा | ३२५४८ | ८३.७४ | १४ |
| पाल्पा | १८५ | रामपुर | ३५३९६ | १२३.३४ | १० |
| | १८६ | तानसेन | ५०४०५ | १०९.८ | १४ |
| नवलपरासी पूर्व | १८७ | कावासोती | ६२४२१ | १०८.३४ | १७ |
| | १८८ | गैंडाकोट | ५८८३६ | १५९.९३ | १८ |
| | १८९ | देवचुली | ४२६०३ | ११२.७२ | १७ |
| | १९० | मध्यविन्दु | ५४१४० | २३३.३५ | १५ |
| नवलपरासी पश्चिम | १९१ | बर्दघाट | ५५३८२ | १६२.०५ | १६ |
| | १९२ | रामग्राम | ५९४५५ | १२८.३२ | १८ |
| | १९३ | सुनवल | ५५४२४ | १३९.१ | १३ |
| रूपन्देही | १९४ | देवदह | ५३५२३ | १३६.९५ | १२ |
| | १९५ | लुम्बिनी सांस्कृतिक | ७२४९७ | ११२.२१ | १३ |
| | १९६ | सैनामैना | ५५८२२ | १६२.१८ | ११ |
| | १९७ | सिद्धार्थनगर | ६३४८३ | ३६.०३ | १३ |
| | १९८ | तिलोत्तमा | १००१४९ | १२६.१९ | १७ |

| | | | | | |
|---|---|---|---|---|---|
| कपिलवस्तु | १९९ | कपिलवस्तु | ७६३९४ | १३६.९१ | १२ |
| | २०० | बुद्धभूमि | ६४९४९ | ३६६.६७ | १० |
| | २०१ | शिवराज | ६६७८१ | २८४.०७ | ११ |
| | २०२ | महाराजगञ्ज | ५४८०० | ११२.२१ | ११ |
| | २०३ | कृष्णनगर | ६२३७० | ९६.६६ | १२ |
| | २०४ | वाणगङ्गा | ७५२४२ | २३३.६८ | ११ |
| अर्घाखाँची | २०५ | सन्धिखर्क | ४१०७९ | १२९.४२ | १२ |
| | २०६ | शीतगङ्गा | ४३३७३ | ६१०.४३ | १४ |
| | २०७ | भूमिकास्थान | ३२६४० | १५९.१३ | १० |
| प्युठान | २०८ | प्युठान | ३८४४९ | १२८.९६ | १० |
| | २०९ | स्वर्गद्वारी | ३०९४० | २२४.७० | ९ |
| रोल्पा | २१० | रोल्पा | ३२७५९ | २७०.४२ | १० |
| रुकुम पश्चिम | २११ | मुसिकोट | ३२९३९ | १३६.०६ | १४ |
| | २१२ | चौरजहारी | २७४३८ | १०७.३८ | १४ |
| | २१३ | आठबिसकोट | ३३६०१ | ५६०.३४ | १४ |
| सल्यान | २१४ | शारदा | ३३७३० | १९८.३४ | १५ |
| | २१५ | बागचौर | ३४११८ | १६३.१४ | १२ |
| | २१६ | बनगाड कुपिण्डे | ३६०५३ | ३३८.२१ | १२ |
| दाङ | २१७ | लमही | ४७६५५ | ३२६.६६ | ९ |
| बाँके | २१८ | कोहलपुर | ७०६४७ | १८४.२६ | १५ |
| बर्दिया | २१९ | गुलरिया | ६६६७९ | ११८.२१ | १२ |
| | २२० | मधुवन | ४६४३७ | १२९.७३ | ९ |
| | २२१ | राजापुर | ५९५५३ | १२७.०८ | १० |
| | २२२ | ठाकुरबाबा | ४४३६१ | १०४.५७ | ९ |
| | २२३ | बाँसगढी | ५५८७५ | २०६.०८ | ९ |
| | २२४ | बारबर्दिया | ६८०१२ | २२६.०९ | ११ |
| सुर्खेत | २२५ | वीरेन्द्रनगर | १००४५८ | २४५.०६ | १६ |
| | २२६ | भेरीगङ्गा | ४१४०७ | २५६.२ | १३ |
| | २२७ | गुर्भाकोट | ४३७६५ | २२८.६२ | १४ |
| | २२८ | पञ्चपुरी | ३२२३१ | ३२९.९ | ११ |
| | २२९ | लेकबेसी | ३०२९५ | १८०.९२ | १० |

| | | | | | |
|---|---|---|---|---|---|
| दैलेख | २३० | नारायण | २७०३७ | ११०.६३ | ११ |
| | २३१ | दुल्लु | ४१५४० | १५६.७७ | १३ |
| | २३२ | चामुण्डा बिन्द्रासैनी | २६१४९ | ९०.६ | ९ |
| | २३३ | आठबीस | २९२२७ | १६८ | ९ |
| जाजरकोट | २३४ | भेरी | ३३५१५ | २१९.७७ | १३ |
| | २३५ | छेडागाड | ३५२९५ | २८४.२ | १३ |
| | २३६ | नलगाड | २५५९७ | ३८७.४४ | १३ |
| डोल्पा | २३७ | ठुली भेरी | ८३७० | ४२१.३४ | ११ |
| | २३८ | त्रिपुरा सुन्दरी | १०१०४ | ३९५.५४ | ११ |
| जुम्ला | २३९ | चन्दननाथ | १९०४७ | १०२.०३ | १० |
| कालिकोट | २४० | खाँडाचक्र | २०२८८ | १३३.२९ | ११ |
| | २४१ | रास्कोट | १६२७२ | ५९.७३ | ९ |
| | २४२ | तिलागुफा | १५७६६ | २६२.५६ | ११ |
| मुगु | २४३ | छायानाथ रारा | २००७८ | ४८०.६७ | १४ |
| बाजुरा | २४४ | बडीमालिका | १६८१८ | २७६ | ९ |
| | २४५ | त्रिवेणी | १८३६३ | १७०.३२ | ९ |
| | २४६ | बुढीगङ्गा | २१६७७ | ५९.२ | १० |
| | २४७ | बुढीनन्दा | १८७७६ | २३२.४८ | १० |
| बझाङ | २४८ | जयपृथ्वी | २२१९१ | १६६.७९ | ११ |
| | २४९ | बुङ्गल | ३३२२४ | ४४७.५९ | ११ |
| अछाम | २५० | मङ्गलसेन | ३२३३१ | २१०.१४ | १४ |
| | २५१ | कमलबजार | २३७३८ | १२०.७८ | १० |
| | २५२ | साँफेबगर | ३३७८८ | १६६.७१ | १४ |
| | २५३ | पञ्चदेवल विनायक | २७४८५ | १४७.७५ | ९ |
| डोटी | २५४ | दिपायल सिलगढी | ३२९४१ | १२६.६२ | ९ |
| | २५५ | शिखर | ३१८०१ | २८५.३७ | ११ |
| कैलाली | २५६ | टीकापुर | ७६०८४ | ११८.३३ | ९ |
| | २५७ | घोडाघोडी | ७५५८६ | ३५४.४५ | १२ |
| | २५८ | लम्कीचुहा | ७५४२५ | २२५ | १० |

| क्र.सं. | राष्ट्रिय लक्ष्य, गन्तव्य र सूचक | एकाइ | आ.व. २०७५/७६ को स्थिति | आ.व. २०८०/८१ को लक्ष्य |
|---|---|---|---|---|
| **१०** | **राष्ट्रिय एकता, सुरक्षा र सम्मान** | | | |
| **१०.१** | **नेपालीत्वको उच्च भावना** | | | |
| १०.१.१ | राष्ट्रिय परिचयपत्र प्राप्त गरेका नेपाली नागरिक | प्रतिशत | - | १०० |
| १०.१.२ | नेपालीलाई गन्तव्य मुलुकको अध्यागमनमा प्रवेशाज्ञा प्रदान गर्ने मुलुक | सङ्ख्या | ३५ | ६० |
| **१०.२** | **मानव तथा अन्य सुरक्षा** | | | |
| १०.२.१ | पाँच वर्षमुनिका बालबालिकाको जन्म दर्ता | प्रतिशत | ६३ | १०० |
| १०.२.२ | आधारभूत खाद्य सुरक्षाको स्थितिमा रहेका परिवार | प्रतिशत | ४८.२ | ८० |
| १०.२.३ | आत्महत्या दर (प्रति लाख जनसङ्ख्यामा) | सङ्ख्या | १० | ५ |
| **१०.३** | **विपद् उत्थानशील समाज र अर्थतन्त्र** | | | |
| १०.३.१ | विपद्का घटनाबाट प्रभावित जनसङ्ख्या | प्रति हजार | १७.१ | ९.८ |
| १०.३.२ | विपद्का घटनाबाट मृत्यु हुने जनसङ्ख्या | प्रति लाख | १.६ | १ |
| **१०.४** | **अत्यावश्यक वस्तु र सेवामा आत्मनिर्भरता** | | | |
| १०.४.१ | कुल आयातमा अत्यावश्यक वस्तु (कृषि उपज, जीवजन्तु र खाद्य पदार्थ) को अंश | प्रतिशत | १४.७ | ५ |

## राष्ट्रिय उद्देश्य

१. सर्वसुलभ, गुणस्तरीय र आधुनिक पूर्वाधार निर्माण, उत्पादनशील र मर्यादित रोजगारी अभिवृद्धि, उच्च, दिगो र समावेशी आर्थिक वृद्धि तथा गरिबी निवारण गर्दै समृद्धिको आधार निर्माण गर्नु

२. गुणस्तरीय स्वास्थ्य तथा शिक्षा, स्वस्थ तथा सन्तुलित वातावरण, सामाजिक न्याय र जवाफदेही सार्वजनिक सेवा कायम गरी सङ्घीय शासन व्यवस्थाको सुदृढीकरण

गर्दै नागरिकलाई परिष्कृत र मर्यादित जीवनयापनको अनुभूति गराउनु

३. सामाजिक-आर्थिक रूपान्तरण तथा स्वाधीन राष्ट्रिय अर्थतन्त्र निर्माण गरी देशको स्वाभिमान, स्वतन्त्रता र राष्ट्रिय हित संरक्षण गर्नु

**राष्ट्रिय रणनीति**

१. तीव्र, दिगो र रोजगारमूलक आर्थिक वृद्धि गर्ने
२. सुलभ तथा गुणस्तरीय स्वास्थ्य सेवा र शिक्षाको सुनिश्चित गर्ने
३. आन्तरिक तथा अन्तरदेशीय अन्तरआबद्धता एवम् दिगो सहरबस्ती विकास गर्ने
४. उत्पादन र उत्पादकत्व अभिवृद्धि गर्ने
५. पूर्ण, दिगो र उत्पादनशील सामाजिक सुरक्षा तथा संरक्षण गर्ने
६. गरिबी निवारण र आर्थिक सामाजिक समानता सहितको न्यायपूर्ण समाज निर्माण गर्ने
७. प्राकृतिक स्रोतको संरक्षण र परिचालन तथा उत्थानशीलता विकास गर्ने र
८. सार्वजनिक सेवाको सुदृढीकरण, प्रादेशिक सन्तुलन र राष्ट्रिय एकता सम्बर्द्धधन गर्ने।

## ५.२ आर्थिक विकासका पक्षहरू

### ५.२.१. कृषि

कुल ग्राहस्थ्य उत्पादनमा २७.७ प्रतिशत योगदान रहेको र ६०.४ प्रतिशत जनसङ्ख्या आबद्ध रहेको कृषि क्षेत्र आर्थिक समृद्धि हासिल गर्ने मुख्य क्षेत्र हो। कृषि क्षेत्रलाई नेपालको अर्थतन्त्रको मेरुदण्डको रूपमा लिइएको छ। संविधानले खाद्यसम्बन्धी अधिकारलाई मौलिक हकका रूपमा प्रत्याभूति गरेको छ। यसै तथ्यलाई मध्यनजर गर्दै खाद्यान्न, फलफूल, तरकारी र माछामासु उत्पादनमा आत्मनिर्भरताका लागि कृषिमा नीतिगत, संरचनागत र संस्थागत प्रबन्ध गरिएको छ। देशलाई खाद्यान्नमा आत्मनिर्भर तुल्याउन र अर्थतन्त्रको विकास गर्न कृषि क्षेत्रमा उल्लेख्य लगानी बढाउनु आवश्यक छ।

नेपालमा २६,४१,००० हेक्टर कृषि योग्य जमिन रहेको, जसमध्ये १४,७३,००० हेक्टर क्षेत्रफलमा सिँचाइ सुविधा पुगेको छ। कूल कृषियोग्य जमिनको ३३ प्रतिशत जमिनमा बाह्रै महिना सिँचाइ सुविधा पुगेको छ। कृषि गणना २०६८ अनुसार नेपालमा ३८,३१,००० कृषक परिवार रहेका छन्। नेपालको कुल जनसङ्ख्याको करिब ७४ प्रतिशत जनसङ्ख्या कृषि पेशामा आबद्ध रहेका छन्।

नेपालमा उत्पादन हुने ठुला प्रमुख खाद्यान्न बालीहरू धान, मकै, गहुँ, कोदो, जौ र फापर हुन्। नेपालको प्रमुख नगदेबालीहरू उखु, आलु, तेलहन, जुट र मह, प्रमुख दलहन बाली मुसुरो, भटमास, मास, अरहर, ग्रासपी, चना, हर्सग्राम रहेका छन्। त्यस्तै, उखु, माछा, चिया, जुट कफी र कपासलाई प्रमुख औद्योगिक बालीका रूपमा उत्पादन हुने गरेको छ। प्रमुख मसला बालीहरू क्रमशः अदुवा, बेसार, लसुन, खुर्सानी र अलैंची उत्पादन हुने गरेको छ।

कृषि उत्पादकत्व वृद्धि गर्न अपरिहार्य स्रोत साधन र सामग्रीहरूको उपलब्धता न्यून हुनु,

आवश्यक भौतिक पूर्वाधारहरू सिँचाइ, सडक, कृषि, बजार, शीत भण्डार, गोदाम घर, चिस्यान केन्द्र, सञ्चालन केन्द्र तथा बिजुली आदिको अपर्याप्तता मूल समस्याका रूपमा देखिएका छन् । कृषिजन्य उत्पादनमा आशातीत उपलब्धि हासिल गर्न अत्यावश्यक उन्नत नश्ल तथा बिउको प्रतिस्थापन दरको कमी छ, यसको अतिरिक्त जमिनको खण्डीकरण प्रमुख समस्याको रूपमा रहेको छ ।

**नेपालमा कृषिसम्बन्धी कानुनी व्यवस्थाहरूः**

- कृषि योग्य जमिनको भूस्वामित्व सन्तुलन कायम राख्न भूमि सम्बन्धी ऐन, २०२१ जारी गरी जग्गाको हदबन्दी कायम गरिएको छ। जस अनुसार तराई/भित्री मधेसमा १० बिगाहा, काठमाडौँ उपात्यकामा २५ रोपनी, पहाडी जिल्लामा ७० रोपनीसम्मको हदबन्दी कायम गरिएको छ ।

**नेपालमा कृषि क्षेत्रमा भएका सुधारका कार्यक्रमहरूः**

- नेपालमा आ.व. २०६३/०६४ देखिएक गाउँ एक उत्पादन कार्यक्रम सञ्चालनमा आएको छ । सुरुमा ३२ जिल्लामा सञ्चालित यो कार्यक्रम आ.व. २०७०/७१ बाट १० जिल्ला थप गरेर ४२ जिल्लामा सञ्चालित रहेको छ ।
- नेपालमा कृषि क्षेत्रको प्रवर्द्धन गरी खाद्यान्नमा आत्मनिर्भर हुन दश वर्षे प्रधानमन्त्री कृषि आधुनिकीकरण परियोजना कार्यक्रम, २०७३ लागु गरिएको छ । यसले नेपालको सात प्रदेश र ७७ वटै जिल्लाहरू समेटेर दुई वर्षमा तरकारी बाली, तीन वर्षभित्र खाद्यान्न बाली र सात वर्षभित्र फलफूलमा आत्मनिर्भर हुन १५००० पकेटहरू, १५०० ब्लकहरू, ३०० जोनहरू, र २१ ओटा सुपर जोनहरू स्थापना गर्ने लक्ष्य राखेको छ ।
- राष्ट्रपति सर्वोत्कृष्ट कृषक पुरस्कार, राष्ट्रपति उत्कृष्ट कृषक पुरस्कारजस्ता कृषि क्षेत्रलाई प्रोत्साहन गर्ने कार्यक्रम ल्याइएको छ ।

### ५.२.२.उद्योग

श्रम, सिप, पुँजी र प्रविधिको समुचित प्रयोग गरी वस्तु तथा सेवा उत्पादन गर्ने व्यावसायिक क्रियाकलापलाई उद्योग भनिन्छ । उद्योग क्षेत्र आर्थिक विकासका लागि दिगो र भरपर्दो आधार हो । नेपाल सरकारको एकल प्रयासमा मात्र सीमित मात्रामा उद्योग सञ्चालनमा रहेको सन्दर्भमा प्रजातन्त्रको पूर्नस्थापना सँगै उदारवादी नीति अवलम्बन, विश्वव्यापीकरणमा आवद्धता, निजीकरण तथा सार्वजनिक निजी साझेदारी जस्ता अवधारणको विकास भए पश्चात औद्योगिक क्षेत्रको विकास र विस्तार भएको हो ।

नेपालको संविधानले तुलनात्मक लाभका क्षेत्रको पहिचान गरी उद्योगको विकास विस्तारद्वारा निर्यात प्रवर्द्धन गर्दै वस्तु तथा सेवाको बजार विविधीकरण र विस्तार गर्ने, राष्ट्रिय अर्थतन्त्रको विकासका लागि राष्ट्रिय उद्योगधन्दा र साधन स्रोतको संरक्षण र प्रवर्द्धन गरी नेपाली श्रम, सिप र कच्चा पदार्थमा आधारित स्वादेशी लगानीलाई




चिज उद्योग, इलाम

प्राथमिकता दिने, औद्योगिक करिडोर, विशेष आर्थिक क्षेत्र, राष्ट्रिय परियोजना, विदेशि लगानीका परियोजनाको सन्दर्भमा अन्तर प्रदेश तथा प्रदेश र सङ्घबिच समन्वय स्थापित गराई आर्थिक विकासलाई गतिशीलता प्रदान गर्ने नीति लिएको छ। यिनै नीतिका मार्गदर्शनबमोजिम औद्योगिक व्यवसाय ऐन, २०७६, विशेष आर्थिक क्षेत्र ऐन, २०७५, विदेशी लगानी तथा प्रविधि हस्तान्तरण ऐन, २०७५, सार्वजनिक निजी साझेदारी तथा लगानी ऐन, २०७५, औद्योगिक ग्राम स्थापना तथा सञ्चालनसम्बन्धी निर्देशिका, २०७५, लगायतका कानुनी व्यवस्था गर्दै नीतिगत सुधार, संरचनागत सुधार र प्रक्रियागत सरलीकरण गर्दै औद्योगिक वातावरण निर्माणमा जोड दिईएको छ।

यिनै प्रयासका बाबजुद नेपालको आर्थिक विकासमा उद्योग क्षेत्रको योगदान क्रमिक रूपमा बढ्दै गएको छ। उद्योगको विकाससँगै वस्तु तथा सेवाको उत्पादन र उत्पादकत्वमा वृद्धि, रोजगारीका अवसरमा अभिवृद्धि, मुलुकमा उपलब्ध स्रोत साधनको अधिकतम परिचालन, आयात प्रतिस्थापन र निर्यात प्रवर्द्धन गर्दै आत्मनिर्भर उन्मुख अर्थतन्त्रको आधार निर्माण भएको छ। आर्थिक सर्वेक्षण २०७७/०७८ अनुसार नेपालको कुल ग्राहस्थ उत्पादनमा औद्योगिक उत्पादनको योगदान पछिल्लो पाँच वर्षमा वार्षिक औषत ५.४ प्रतिशत रहेको छ। साथै आ.ब. २०७७/७८ मा यस्तो योगदान ५.१ प्रतिशत हुने अनुमान रहेको छ। ठुला, मझौला र साना गरी ८३८४ उद्योगमा ६ लाख २४ हजार ६ सय ६१ कुल रो जगारी रहेको छ। प्रति उद्योग औषत रोजगारी सङ्ख्या ७५ जना सिर्जना हुने अनुमान छ। उद्योग क्षेत्र एक अन्तर सम्बन्धित क्षेत्र भएकोले यसको विकाससँगै कृषि, व्यापार, पर्यटन, यातायात लगायतका क्षेत्रहरको समेत प्रत्यक्ष वा अप्रत्यक्ष विकासमा सहयोग पुग्दछ। नेपाल उद्योग व्यवसाय सञ्चालन सहजताको अवस्था चित्रण गर्ने व्यवसाय

गर्ने प्रतिवेदन, २०२० (Doing Business Report, 2020) अनुसार ९४ औँ स्थानमा रहँदै लगानीमैत्री वातावरण निर्माणको सन्देश प्रवाह गरेको छ । यसबाट नेपालको आर्थिक विकासमा उद्योग क्षेत्रको योगदान अभिवृद्धि हुने सम्भावना बढ्दै गएको छ । २०७६/७७ को फागुनसम्म ४९९९ उद्योगमा ३ खर्ब २४ अर्ब पाँच लाख बराबरको विदेशी लगानी भित्रिएको छ । धेरै लगानी गर्ने राष्ट्रहरूमा क्रमशः चीन, भारत, बेलायत, अमेरिका, दक्षिणकोरिया, सिंगापुर, युएई, मौरिसस, क्यानडा र जापान रहेका छन् ।

**नेपालमा उद्योगको वर्गीकरण**

औद्योगिक व्यवसाय ऐन, २०७६ ले उद्योग सञ्चालन र व्यवस्थापनमा प्रभावकारीताका लागि उद्योगको स्थिर पुँजी तथा उद्योगबाट उत्पादन हुने वस्तु वा सेवाको प्रकृतिको आधारमा निम्नबमोजिम वर्गीकरण गरेको छ ।

१. **स्थिर पुजीका आधारमा**

- लघु उद्यमः घरजग्गा बाहेक बढिमा २० लाख रुपियाँसम्म स्थिर पुँजी रहेका उद्योग
- घरेलु उद्योगः परम्परागत सीप र प्रविधिमा आधारित उद्योग
- साना उद्योगः लघु उद्यम र घरेलु उद्योगबाहेक १५ करोडसम्म स्थिर पुँजी भएका उद्योग
- मझौला उद्योगः १५ करोड रुपियाँ भन्दाबढि ५० करोड रुपियाँसम्म स्थिर पुँजी भएको उद्योग
- ठुला उद्योगः ५० करोड रुपियाँ भन्दाबढि स्थिर पुँजी भएका उद्योग

२. **उत्पादन हुने वस्तु वा सेवाको प्रकृतिका आधारमा**

- ऊर्जामूलक उद्योग
- उत्पादनमूलक उद्योग
- कृषि तथा वन पैदावरमा आधारित उद्योग
- खनिज उद्योग
- पूर्वाधार उद्योग
- पर्यटन उद्योग
- सूचना प्रविधि, सञ्चार प्रविधि तथा सूचना प्रसारण प्रविधिमा आधारित उद्योग
- सेवामूलक उद्योग

### ५.२.३. व्यापार

मालबस्तु वा सेवाको खरिद, विक्री, विनिमय र ओसारपसार गर्ने पद्धतिलाई नै ब्यापार भनिन्छ । नेपालमा विगत लामो समयदेखि वस्तु तथा सेवाको आयात उच्च र निर्यात न्यून हुँदै गएकोले व्यापार घाटाको स्थितिमा रहेको छ । नेपालको संविधानले आयात व्यवस्थापन र निर्यात प्रवर्द्धनको क्षेत्रमा वैदेशिक पुँजी र प्रविधिको लगानीलाई प्रोत्साहन

गर्ने नीति लिएको छ । निर्यातको तुलनामा आयातको आकार ठुलो र फराकिलो रहेकाले व्यापार घाटा निरन्तर बढिरहेको भए पनि विप्रेषण आयका कारण नेपालको शोधान्तर स्थिति विगतका अधिकांश वर्षहरूमा बचतमा रहेको देखिन्छ । हाल सरकारले आयात प्रतिस्थापन र निर्यात अभिवृद्धिको दुई धारको रणनीति लिएको छ ।

आर्थिक सर्वेक्षण ०७६/७७ अनुसार कुल वस्तु निर्यात २२.३ प्रतिशतले बृद्धि भएर ७४ अर्ब ९१ करोड पुगेको छ । बस्तु आयात गत आ.ब. को तुलनामा २.६ प्रतिशतले घटेर ९ खर्ब, २४ अर्ब, २४ करोड रहेको छ । यस वर्ष ४.३ प्रतिशतले व्यापार घाटा संकुचन भएर ८ खर्ब, ४९ अर्ब, ३३ करोड रहेको छ ।

उच्च व्यापार घाटा, कृषि तथा औद्योगिक उत्पादन न्यून, स्वदेशी वस्तुको उत्पादनमा वृद्धि नहुनु, निर्यात प्रवर्द्धनका लागि वस्तु र देशगत विविधीकरण गर्न नसक्नु, खुला सिमानाका कारण चोरी निकासी पैठारी नियन्त्रणमा कमी ल्याउन नसकिनु, सेवा व्यापारमा अपेक्षित वृद्धि नहुनु र औद्योगिक पूर्वाधारहरूको विकास गर्न नसकिनु यस क्षेत्रका मुख्य समस्या तथा चुनौतीहरू हुन् ।

लगानीको वातावरण सुधार गर्दै भारतसँग थप बन्दरगाह उपयोग सम्बन्धी सम्झौता र चीनसँग पारवाहन सम्झौता गरी कृषि तथा औद्योगिक उत्पादनमा वृद्धि गरेर छिमेकी मुलुक लगायत अन्य विकसित मुलुकतर्फ निर्यात मार्फत देशको अर्थतन्त्र उकास्न सकिन्छ । जलविद्युत् उत्पादन गरी छिमेकी देशहरूमा निर्यात गर्न सकिने ठुलो सम्भावना छ । कृषि तथा वन पैदावार र खनिज पदार्थमा आधारित वस्तुहरू स्वदेशमा नै उत्पादन अभिवृद्धि गरी स्वदेशी वस्तुको उपयोग गर्न सकिन्छ । विदेश जाने कामदारको सीप र दक्षता अभिवृद्धि गरी विप्रेषण आप्रवाह वृद्धि गर्ने सम्भाना बढ्नु, ऊर्जा, खनिज, पर्यटन र औद्योगिक उत्पादनका क्षेत्रमा उल्लेखनीय स्वदेशी तथा विदेशी लगानी गरी विदेशी मुद्रा सञ्चिति कायम गर्दै व्यपार क्षेत्रलाई अर्थतन्त्रको प्रमुख खम्बाको रूपमा विकास गरी अधिकतम लाभ लिन सकिन्छ ।

### ५.२.४. पर्यटन

नेपालको अर्थतन्त्रको विकासका लागि उच्च सम्भावनाको क्षेत्र पर्यटन हो । नेपाल प्राकृतिक, साँस्कृतिक, साहसिक, ऐतिहासिक तथा धार्मिक दृष्टिकोणबाट विश्वकै एक प्रमुख पर्यटकीय गन्तव्य बनेको छ । यस्ता स्थान र सम्पदाको संरक्षण, प्रवर्द्धन र विविधीकरण गर्दै पर्यटकीयस्थलहरूको रूपमा विकास गरी राष्ट्रिय अर्थतन्त्रको प्रमुख आधारको रूपमा यस क्षेत्रलाई विकास गर्ने नीति नेपालको संविधानले अङ्गीकार गरेको छ । पर्यटन प्रवर्द्धन गरी रोजगारीको अवसरमार वृद्धि गर्दै गरिबी निवारण र जनताको जीवनस्तरमा सुधार ल्याई आर्थिक समृद्धिको लक्ष्य हासिल गर्न यस क्षेत्रको महत्त्वपूर्ण योगदान रहने भएकोले नेपाली अर्थतन्त्रमा पर्यटनलाई प्रमुख सम्वाहकको रूपमा लिने गरिएको छ ।

छिमेकी मुलुकहरू ठुलो जनसङ्ख्या र उच्च आर्थिक वृद्धिबाट सिर्जित अवसरबाट लाभ प्राप्त गरी नेपालमा पर्यटन आगमन द्रुततररूपमा वृद्धि हुने राम्रो सम्भावना रहेको छ ।



र्‍याफि्टङ गर्दै पर्यटक

यसबाट उच्च रोजारी सिर्जना राष्ट्रिय अर्थतन्त्रको प्रमुख आधार सिर्जना गर्दछ । जसका लागि पर्यटकीय गन्तव्यहरूको विविधीकरण गर्दै पर्यटकीय गन्तव्यहरूको पहिचान र पूर्वाधारहरूको विकास गरी रोजगारीको अवसरका वृद्धि गरेर गरिबी न्यूनीकरण गर्दै जनताको जीवनस्तरमा सुधार ल्याउन सकिन्छ ।

पर्यटन विकासमा पर्यटन उपज र क्रियाकलापको अपेक्षित विकास र विविधरण हुन नसक्नु, अन्तर्राष्ट्रिय स्तरमा पर्यटन प्रवर्द्धन अपेक्षित रूपमा गर्न नसकिनु, पर्यटन पूर्वाधारको कमी हुनु, धार्मिक तथा सांस्कृतिक सम्पदाहरूको संरक्षण संवर्द्धन र पर्यटन विकासमा निजी क्षेत्रलाई पर्याप्त सहभागी गराउन नसक्नु, पर्यटन क्षेत्रको विकासमा उद्यमशीलता विकासलाई जोड्न नसकिनु, पर्यटन क्षेत्रबाट प्राप्त लाभको न्यायोचित वितरण हुन नसक्नु र पर्यटकीय गतिविधि प्रविधिमैत्री नहुनु यस क्षेत्रका मुख्य समस्याहरू हुन् ।

अध्यागमन विभागका अनुसार सन् २०१८ मा स्थलमार्गबाट आएका भारतीय पर्यटक बाहेक ११ लाख ७३ हजार ७२ पर्यटक नेपाल भ्रमणमा आएका छन् । त्यस्तै सन् २०१९ मा ११ लाख ९७ हजार १ सय ९१ पर्यटक नेपाल भ्रमणमा आएका छन् । यो सन् २०१८ को तुलनामा २ प्रतिशतले मात्र बढी हो । जसमध्ये ९ लाख ९५ हजार पर्यटक हवाईमागबाट नेपाल आएका छन् । नेपाल घुम्न आउने पर्यटकहरू क्रमशः भारत, चीन, अमेरिका, बेलायत र फ्रान्सका रहेका छन् । सन् २०१९ मा नेपाल आउने पर्यटकको औसत बसाइ १३ दिन र प्रतिदिन खर्च ४४ अमेरिकी डलर रहेको छ । सन् २०१८ मा औषत बसाइ अवधि १२.४ दिन र प्रतिदिन खर्च ४४ अमेरिकी डलर रहेको थियो ।

सङ्घीय संरचना अनुरूप तीन तहका सरकारबाट पर्यटन क्षेत्रमा उत्साहजनक काम गर्ने वातावरण तयार गर्दै भूकम्पबाट क्षतिग्रस्त साँस्कृतिक सम्पदाहरूको पूनर्निर्माण

सम्पन्न गरेर थप पर्यटकीय गन्तव्यहरूको पहिचान गर्नु पर्दछ। नेपाल भित्रिने अधिकांश पर्यटकहरूले विमानस्थलको प्रयोग गर्ने पाइएकोले अन्तर्राष्ट्रिय विमानस्थलहरूको पूर्वाधार निर्माणले गतिलिनु पर्दछ। प्राकृतिक सुन्दरता, साँस्कृतिक विविधता, अनन्त शान्तिआभाष, आध्यात्मिकता, प्राचीन ज्ञान र दर्शनको उद्‌गमस्थल, जैविक विविधता लगायतका पर्यटकीय गन्तव्य र उपजहरूका कारण पर्यटन केन्द्र बन्ने प्रबल सम्भावनाले समृद्धिको प्रमुख सम्वाहकको रूपमा पर्यटन क्षेत्रलाई स्थापित गरी अधिकतम लाभ लिन सकिन्छ।

### ५.२.५. वैदेशिक रोजगार

वर्तमान विश्वव्यापिकरणको युगमा वैदेशिक रोजगार आर्थिक विकासको एक महत्त्वपूर्ण आयामको रूपमा स्थापित भएको छ। खास गरी मुलुकमा रहेको बेरोजगार एवम् अनुत्पादक श्रम शक्तिलाई उनीहरूको योग्यता, सिप तथा दक्षता अनुरूप अन्य विभिन्न मुलुकमा रोजगारीका लागि पठाई उनीहरूमार्फत वैदेशिक आय (विप्रेषण), सीप, प्रविधि र अनुभव स्वदेशमा भित्र्याइन्छ। वैदेशिक रोजगारीले विशेषगरी नेपाल जस्ता विकासोन्मुख राष्ट्रहरूको अर्थतन्त्रमा सकारात्मक प्रभाव पारेको पाईन्छ। नेपालको अर्थव्यवस्थामा वैदेशिक रोजगारीको योगदान उल्लेखनीय रहेको छ। विगतको द्वन्दको समयमा अर्थतन्त्रका आन्तरिक पक्षहरू कृषि, उद्योग, व्यापार लगायतका क्षेत्रहरूमा नकारात्मक असर परेको अवस्थामा समेत वैदेशिक रोजगारीले निरन्तर टेवा पुऱ्याईरहेको देखिन्छ।

वैदेशिक रोजगारी नेपालका लागि रहर होइन बाध्यता रहेको छ। देशमा आर्थिक, सामाजिक तथा औद्योगिक क्षेत्रमा आशातीत रूपमा विकास हुन नसक्दा ठुलो सङ्ख्यामा युवा शक्ति वैदेशिक रोजगारीमा जानु पर्ने बाध्यता रहेको छ। चालु पन्ध्रौँ योजना अनुसार नेपालमा प्रत्येक वर्ष करिब पाँच लाख थप जनशक्ति श्रम बजारमा प्रवेश गर्ने तर आन्तरिक श्रम बजारको प्रशोचन क्षमता न्यून हुँदा अतिरिक्त श्रमशक्ति वैदेशिक रोजगारीमा जानेको गरेको पाईन्छ। हाल करिब एक हजार युवा दैनिक रूपमा विदेशिने गरेका छन्  र विप्रेषण आय कुल ग्राहस्थ उत्पादनको अनुपातमा औषत २५ प्रतिशत रहेको छ जुन विश्वकै उच्च मध्येको एक हो। आर्थिक सर्वेक्षण २०७६/७७ का अनुसार नेपालले संस्थागत रूपमा ११० देशलाई वैदेशिक रोजगारीका लागि खुला गरेको छ भने व्यक्तिगत रूपमा श्रम स्वीकृतिमा १७२ मुलुकमा नेपाली कामदारहरू वैदेशिक रोजगारीमा गएका छन्। २०७६ फागुनसम्म बैदेशिक रोजगारीका लागि श्रम स्वीकृति लिनेको सङ्ख्या ५० लाख ४१ हजार रहेको छ भने ४७ लाख ९२ हजार कामदार बैदेशिक रोजगारीमा गएका छन्। जसमध्ये दक्ष कामदार १.५ प्रतिशत, २४ प्रतिशत अर्धदक्ष र ७४.५ प्रतिशत अदक्ष जनशक्ति विदेशिने हुँदा नेपालले यसबाट पूर्ण लाभ लिन सकिरहेको छैन। नेपाली कामदारको मूख्य गन्तव्यका रूपमा कतार, मलेसिया, बहराईन, साउदी अरेविया, संयुक्त अरब इमिरेट्स र कुबेत रहेका छन्।

नेपालमा वैदेशिक रोजगारीका माध्यमबाट विशेषतः गरिबी निवारणमा उल्लेखनीय

भूमिका खेलेकोले सरकारी स्तरबाटै यसको प्रवर्द्धन गरिए पनि यो विकासको दिर्घकालिन स्रोत होईन । मुलुकभित्रै कृषि क्षेत्रको आधुनिकिकरण एवम् व्यवसायिकरण, उद्योग क्षेत्रको विकास र विस्तार तथा विविध स्वरोजगारीका अवसर सिर्जनामार्फत बाध्यात्मक वैदेशिक रोजगारीको अन्त्य गरी दक्ष एवम् सीपयुक्त जनशक्तिलाई मात्र वैदेशिक रोजगारीमा परिचालन गर्दै वैदेशिक रोजगारीलाई सुरक्षित, मर्यादित र व्यवस्थित गरेमा नेपालले आर्थिक विकासमा वैदेशिक रोजगारीबाट अधिकतम लाभ लिन सकिन्छ ।

**५.३. आ.व. २०७८/७९ को बजेट**

आ.ब. २०७८/७९ को बजेट नेपाल सरकारका अर्थमन्त्री श्री विष्णुप्रसाद पौडेलले आ.व. २०७८/७९ का लागि २०७८ जेठ १५ मा अध्यादेश मार्फत पेश गर्नु भएको बजेट निम्नानुसार छ ।

**कुल बजेट** : १६ खर्ब ४७ अर्ब ५७ करोड ६७ लाख रुपैयाँ ।
**प्रदेशमा जम्मा** : १ खर्ब ३ अर्ब १७ करोड २५ लाख
**स्थानीयभर जम्मा** : २ खर्ब ८३ अर्ब १ करोड ३७ लाख
**सङ्घमा जम्मा** : १२ खर्ब ६० अर्ब ८५ करोड ९५ लाख ।
**चालु/पुँजीगत** : १० खर्ब ५२ अर्ब ८८ करोड १९ लाख
**वित्तीय** : २ खर्ब ७ अर्ब ९७ करोड ७६ लाख

**स्रोततर्फ:**
**राजश्व सहित अन्य आम्दानी** : १२ खर्ब ७४ अर्ब ९० करोड ७३ लाख ।

| | |
|---|---|
| **बैदेशिक अनुदान** | : ६३ अर्ब ३७ करोड ६२ लाख |
| **बैदेशिक ऋण** | : ३ खर्ब ९ अर्ब २९ करोड ३२ लाख |
| **राजश्व सहित** | : १२,७४,९०,७३ |
| **अनुदान** | : ६३,३७,६२ |
| **ऋण** | : ३,०९,२९,३२ |
| **सङ्घ** | : १२,६०,८५,९५ |
| **प्रदेश** | : १,०३,७०,२५ |
| **स्थानीय** | : २,८३,०१,४७ |

**दिगो विकास लक्ष्य सङ्केतका आधारमा विनियोजित रकम**

| | |
|---|---|
| सांकेतिकरण नगरिएको | २०.९९ प्रतिशत |
| गरिबीको अन्त्य | ७.०७ प्रतिशत |
| शून्य भोकमरी | ४.३२ प्रतिशत |
| स्वस्थ जीवन | ७.६७ प्रतिशत |
| गुणस्तरीय शिक्षा | ११.०३ प्रतिशत |
| लैङ्गिक समानता | ०.०४ प्रतिशत |
| दिगो सफा पानी तथा सरसफाई सेवा | २.२९ प्रतिशत |

| | |
|---|---|
| आधुनिक उर्जामा पहुँच | ५.४ प्रतिशत |
| समावेशी आर्थिक वृद्धि तथा मर्यादित काम | ३.०६ प्रतिशत |
| उद्योग, नवीन खोज र पूर्वाधार | १४.०७ प्रतिशत |
| असमानता न्यूनिकरण | ५.६९ प्रतिशत |
| दिगो सहर र वस्तीहरू | ८.७५ प्रतिशत |
| जलबायु परिवर्तन अनुकुलन | १.०१ प्रतिशत |
| भूसतह स्रोतको उपयोग | ०.७५ प्रतिशत |
| शान्तिपूर्ण, न्यायपूर्ण र सशक्त समाज | ७.४४ प्रतिशत |
| दिगो विकासका लागि साझेदारी | २.४३ प्रतिशत |

**बजेटका मुख्य मुख्य विशेषताहरू**

- आर्थिक वृद्धिदर र मुद्रास्फिती दर ६.५ प्रतिशत हुने
- कोभिड नियन्त्रणमा बजेट केन्द्रित, उपचार र खोप सुनिश्चितताका लागि बजेट कमी हुन नदिने
- सबै प्रदेशमा भूबैङ्क स्थापना, खाली जग्गा व्यवसायिक खेतिमा लगाइने
- सरकारले निजी क्षेत्रसँग मिलेर "मेड इन नेपाल, मेक इन नेपाल" अभियान सञ्चालन गर्ने
- स्थानीय पूर्वाधार साझेदारी विकास कार्यक्रम खारेज
- सङ्घ, प्रदेश र स्थानीय तहबीच समन्वय र सहकार्य मार्फत् सन्तुलित विकास गर्ने
- जीवनपयोगी एवम् सीपयुक्त शिक्षाका लागि पूर्वाधारमा लगानी
- श्रम बजारमा प्रवेश गर्ने तथा रोजगारी गुमाएका श्रमिकलाई काम र रोजगारीको सुनिश्चितता गर्ने

**आ.व. २०७८/७९ को बजेटको उद्देश्य**

**उद्देश्यहरू**

(क) कोभिड-१९ को महामारीबाट नागरिकको जीवन रक्षा गर्ने,

(ख) अर्थतन्त्रको शीघ्र पुनरुत्थान गर्न आर्थिक गतिविधि एवं विकास निर्माणका लागि कार्यक्रमलाई तीब्रता दिने,

(ग) राज्यको लोककल्याणकारी भूमिकालाई सुदृढ बनाउने, सामाजिक सुरक्षा एवं संरक्षण प्रदान गर्ने र सामाजिक न्यायसहितको समृद्धि हासिल गर्ने,

(घ) सार्वजनिक निजी र सहकारी क्षेत्रमा उपलब्ध स्रोत र साधनलाई उत्पादनशील क्षेत्रमा परिचालन गर्दै उत्थानशील अर्थतन्त्र निर्माण गर्ने,



परिच्छेद : छ

# नेपालको सामाजिक जीवन तथा संस्कृति

## ६.१ नेपालको सामाजिक जीवन



केही नेपाली मुहारहरू

क्षेत्रफलको हिसाबले नेपाल विश्वको मध्यम आकारको मुलुक मानिन्छ। यद्यपि नेपाल विविधताले भिरपूर्ण छ। नेपालमा भौगोलिक, जातीय, भाषिक, धार्मिक तथा सांस्कृतिक विविधता स्पष्ट देख्न पाइन्छ। यसर्थ, नेपाल बहुजातीय, बहुभाषिक, धार्मिक र सांस्कृतिक देश हो। क्षेत्री, ब्राह्मण, मगर, थारू, तामाङ, नेवार, मुसलमान, कामी, यादव, राई, गुरुङजस्ता जनसङ्ख्याको आकारका हिसाबले ठुला जनजातिलगायतका १२५ जातजातिका मानिसहरू यहाँ बस्छन्। यिनीहरूको मातृभाषाको रूपमा

आआफ्नै भाषा छन् । भनिएको पनि छ- “नेपाल चार जात छत्तीस वर्णको साझा फूलबारी हो ।” यहाँ १० ओटा धर्म मान्ने मानिसहरू बस्छन् । हिन्दु धर्म मान्ने मानिसहरू शिव, दुर्गा आदिको पूजा गर्छन् । बुद्ध धर्मका अनुयायीहरूले भगवान बुद्धलाई पूजा गर्छन् । इस्लाम धर्म मान्नेहरूले ईश्वरलाई अल्लाह भन्दछन् । इसाई धर्म मान्नेहरू चर्चमा गएर क्राइस्टको प्रार्थना गर्दछन् । किरात धर्म मान्नेहरू पारुहाङ र सुङनीमा (सुम्निमा) लाई मान्दछन् । नेपाल संस्कृतिमा धनी राष्ट्र हो । बहुभाषी, बहुजाति र बहुधर्मका मानिसका आआफ्नै भेषभूषा र संस्कृति छन् । व्यक्तिबाट परिवार, परिवारबाट समाज र  समाजबाट राष्ट्र बनेको हुन्छ । समाजभित्र विभिन्न धर्म, पेसा, जातजाति, संस्कृति, भाषाभाषी, भेषभुषा, खानपान, रहनसहन, चाडपर्व, उत्सव आदि भएका मानिसहरू बसोबास गर्दछन् । यसैअनुरूप समाजमा विभिन्न गतिविधि हुने गर्दछ । समाजमा हुने विभिन्न राजनीतिक, धार्मिक, आर्थिक, सांस्कृतिक गतिविधिदेखि लिएर ज्ञान-विज्ञान, साहित्य, कला, मनोरञ्जन आदि जस्ता सम्पूर्ण गतिविधि राष्ट्रलाई पहिचान गराउने तत्वहरू हुन् ।

### ६.१.१ जातिगत विविधता

वि.स. २०६८ को जनगणनाअनुसार नेपालमा बसोबास गर्ने विभिन्न जातजातिका मानिसहरूको जनसङ्ख्या विवरण तालिका ६.१ मा उल्लेख गरिएको छ ।

**तालिका नं. ६.१**

**जातिगत जनसङ्ख्या विवरण (राष्ट्रिय जनगणना २०६८)**

| क्र.सं. | जातजातिहरू | जनसङ्ख्या | प्रतिशत |
|---|---|---|---|
| १ | क्षेत्री | ४३९८०५३ | १६.६०० |
| २ | ब्राह्मण–पहाडी | ३२२६९०३ | १२.१८० |
| ३ | मगर | १८८७७३३ | ७.१२५ |
| ४ | थारू | १७३७४७० | ६.५५८ |
| ५ | तामाङ | १५३९८३० | ५.८१२ |
| ६ | नेवार | १३२१९३३ | ४.९८९ |
| ७ | मुसलमान | ११६४२५५ | ४.३९४ |
| ८ | कामी | १२५८५५४ | ४.७५० |
| ९ | यादव | १०५४४५८ | ३.९८० |
| १० | राई | ६२०००४ | २.३४० |

| | | | |
|---|---|---|---|
| ११ | गुरुङ | ५२२६४१ | १.९७३ |
| १२ | दमाइँ/ढोली | ४७२८६२ | १.७८५ |
| १३ | लिम्बू | ३८७३०० | १.४६२ |
| १४ | ठकुरी | ४२५६२३ | १.६०६ |
| १५ | सार्की | ३७४८१६ | १.४१५ |
| १६ | तेली | ३६९६८८ | १.३९५ |
| १७ | चमार/हरिजन/राम | ३३५८९३ | १.२६८ |
| १८ | कोइरी/कुशवाहा | ३०६३९३ | १.१५६ |
| १९ | कुर्मी | २३११२९ | ०.८७२ |
| २० | सन्यासी/दशनामी | २२७८२२ | ०.८६० |
| २१ | धानुक | २१९८०८ | ०.८३० |
| २२ | मुसहर | २३४४९० | ०.८८५ |
| २३ | दुसाध/पासवान/पासी | २०८९१० | ०.७८८ |
| २४ | शेर्पा | ११२९४६ | ०.४२६ |
| २५ | सोनार | ६४३३५ | ०.२४३ |
| २६ | केवट | १५३७७२ | ०.५८० |
| २७ | ब्राह्मण-तराई | १३४१०६ | ०.५०६ |
| २८ | कथवनीया | १३८६३७ | ०.५२३ |
| २९ | घर्ती/भुजेल | ११८६५० | ०.४४८ |
| ३० | मल्लाह | १७३२६१ | ०.६५४ |
| ३१ | कलवार | १२८२३२ | ०.४८४ |
| ३२ | कुमाल | १२११९६ | ०.४५७ |
| ३३ | हजाम/ठाकुर | ११७७५८ | ०.४४४ |
| ३४ | कानू | १२५१८४ | ०.४७२ |

| | | | |
|---|---|---|---|
| ३५ | राजवंशी | ११५२४२ | ०.४३५ |
| ३६ | सुनुवार | ५५७१२ | ०.२१० |
| ३७ | सुढी | ९३११५ | ०.३५१ |
| ३८ | लोहार | १०१४२१ | ०.३८३ |
| ३९ | तत्मा/तत्वा | १०४८६५ | ०.३९६ |
| ४० | खत्वे | १००९२१ | ०.३८१ |
| ४१ | धोवी | १०९०७९ | ०.४१२ |
| ४२ | माझी | ८३७२७ | ०.३१६ |
| ४३ | नुनिया | ७०५४० | ०.२६६ |
| ४४ | कम्हार | ६२३९९ | ०.२३५ |
| ४५ | दनुवार | ८४११५ | ०.३१७ |
| ४६ | चेपाङ/प्रजा | ६८३९९ | ०.२५८ |
| ४७ | हलुवाई | ८३८६९ | ०.३१७ |
| ४८ | राजपुत | ४१९७२ | ०.१५८ |
| ४९ | कायस्थ | ४४३०४ | ०.१६७ |
| ५० | बढई | २८९३२ | ०.१०९ |
| ५१ | मारवाडी | ५१४४३ | ०.१९४ |
| ५२ | सन्थाल/सतार | ५१७३५ | ०.१९५ |
| ५३ | धागर/झागँड | ३७४२४ | ०.१४१ |
| ५४ | बाँतर | ५५१०४ | ०.२०८ |
| ५५ | बरई | ८०५९७ | ०.३०४ |
| ५६ | कहर | ५३१५९ | ०.२०१ |
| ५७ | गनगाई | ३६९८८ | ०.१४० |
| ५८ | लोध | ३२८३७ | ०.१२५ |

| | | | |
|---|---|---|---|
| ५९ | राजभर | ९५४२ | ०.०३६ |
| ६० | थामी | २८६७१ | ०.१०८ |
| ६१ | धिमाल | २६२९८ | ०.०९९ |
| ६२ | भोटे | १३३९७ | ०.०५१ |
| ६३ | बिन | ७५१९५ | ०.२८४ |
| ६४ | भेडियार/गडेरी | २६३७५ | ०.१०० |
| ६५ | नुराङ | २७८ | ०.००१ |
| ६६ | याक्खा | २४३३६ | ०.०९२ |
| ६७ | दराई | १६७८९ | ०.०६३ |
| ६८ | ताजपुरिया | १९२१३ | ०.०७३ |
| ६९ | थकाली | १३२१५ | ०.०५० |
| ७० | चिडिमार | १२५४ | ०.००५ |
| ७१ | पहरी | १३६१५ | ०.०५१ |
| ७२ | माली | १४९९५ | ०.०५७ |
| ७३ | बङ्गाली | २६५८२ | ०.१०० |
| ७४ | छन्त्याल | ११८१० | ०.०४५ |
| ७५. | डोम | १३२६८ | ०.०५० |
| ७६ | कमर | १७८७ | ०.००६ |
| ७७ | बोटे | १०३९७ | ०.०३९ |
| ७८ | ब्रम्हु/ बरामो | ८१४० | ०.०३१ |
| ७९ | गाइने | ६७९१ | ०.०२६ |
| ८० | जिरेल | ५७७४ | ०.०२२ |
| ८१ | दुरा | ५३९४ | ०.०२० |
| ८२ | बादी | ३८६०३ | ०.१४६ |

| | | | |
|---|---|---|---|
| ८३ | मेचे | ४८६७ | ०.०१८ |
| ८४ | लेप्चा | ३४४५ | ०.०१३ |
| ८५ | हलखोर | ४००३ | ०.०१५ |
| ८६ | पन्जावी/सिख | ७१७६ | ०.०२७ |
| ८७ | किसान | १७३९ | ०.००७ |
| ८८ | राजी | ४२३५ | ०.०१६ |
| ८९ | व्यासी/सौका | ३८९५ | ०.०१५ |
| ९० | हायू | २९२५ | ०.०११ |
| ९१ | कोचे | १६३५ | ०.००६ |
| ९२ | धुनिया | १४८४६ | ०.०५६ |
| ९३ | वालुङ | १२४९ | ०.००५ |
| ९४ | मुन्डा | २३५० | ०.००७ |
| ९५ | राउटे | ६१८ | ०.००२ |
| ९६ | ह्योल्मो | १०७५२ | ०.०४१ |
| ९७ | पथरकट्टा/कुशवाडिया | ३१८२ | ०.०१२ |
| ९८ | कुसुन्डा | २७३ | ०.००१ |
| ९९ | ल्होमी | १६१४ | ०.००६ |
| १०० | कलार | १०७७ | ०.००४ |
| १०१ | नटुवा | ३०६३ | ०.०१२ |
| १०२ | ढाँडी | १९८२ | ०.००७ |
| १०३ | धन्कार/धरिकार | २६८१ | ०.०१० |
| १०४ | कुलुङ | २८६१३ | ०.१०८ |
| १०५ | घले | २२८८१ | ०.०८६ |
| १०६ | खबास | १८५१३ | ०.०७० |

| | | | |
|---|---|---|---|
| १०७ | राजधोव | १३४२२ | ०.०५१ |
| १०८ | कोरी | १२२७६ | ०.०४६ |
| १०९ | नाछिरिङ | ७१५४ | ०.०२७ |
| ११० | याम्फू | ६९३३ | ०.०२६ |
| १११ | चाम्लिङ | ६६६८ | ०.०२५ |
| ११२ | आठपहरिया | ५९७७ | ०.०२३ |
| ११३ | सरवरिया | ४९०६ | ०.०१९ |
| ११४ | बान्तवा | ४६०४ | ०.०१८ |
| ११५ | डोल्पो | ४१०७ | ०.०१६ |
| ११६ | अमात | ३८३० | ०.०१४ |
| ११७ | थुलुङ | ३५३५ | ०.०१३ |
| ११८ | मेवाहाङ वाला | ३१०० | ०.०१२ |
| ११९ | बाहिङ | ३०९६ | ०.०१२ |
| १२० | ल्होपा | २६२४ | ०.०१० |
| १२१ | देव | २१४७ | ०.००८ |
| १२२ | साङपाङ | १६८१ | ०.००६ |
| १२३ | खालिङ | १५७१ | ०.००६ |
| १२४ | तोप्केगोला | १५२३ | ०.००६ |
| १२५ | लोहारुङ | ११५३ | ०.००४ |
| १२६ | अन्य दलितहरू | १५५३५४ | ०.५८६ |
| १२७ | अन्य जनजातिहरू | १२२८ | ०.००५ |
| १२८ | अन्य तराईबासीहरू | १०३८११ | ०.३९२ |
| १२९ | पहिचान नभएका अन्य | १५२७७ | ०.०५८ |
| १३० | विदेशी | ६६५१ | ०.०२५ |
| | **जम्मा** | २,६४,९४,५०४ | १०० |

### ६.१.२ नेपालका सूचीकृत आदिवासी जनजातिहरू

नेपालमा आर्थिक, सामाजिक, राजनीतिक दृष्टिले पिछडिएका जाति जनजातिहरूको उत्थान गर्ने उद्देश्यले वि.स. २०५४ असारमा राष्ट्रिय जनजाति विकास समिति गठन गरिएको छ । साझा भूगोल, साझा भाषा तथा आफ्नै प्रकारको धर्म, संस्कृति मूल्य मान्यतासहितको विशिष्ट पहिचान बोकेका आदिवासी जनजातिहरूको सङ्ख्या निकै ठुलो रहेको छ । आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन, २०५९ ले ५९ आदिवासी जनजातिहरूको पहिचान गरी तिनलाई कानुनी मान्यता प्रदान गरेको छ ।

**तालिका नं. ६.२**

**नेपालका सूचीकृत आदिवासी जनजाति**

**सूचीकृत आ.ज.वर्गीकरण आधारमा राष्ट्रिय जनगणना २०६८ को तथ्याङ्क अनुसार**

| क्र.सं. | क. लोपोन्मुख समूह | सङ्ख्या | | | |
|---|---|---|---|---|---|
| | | आदिवासी जनजाति | (%) | मातृ भाषा | (%) |
| १ | कुसुन्डा | २७३ | ०.० | २८ | ०.० |
| २ | बनकरिया | - | ०.० | ६९ | ०.० |
| ३ | राउटे | ६१८ | ०.० | ४६१ | ०.० |
| ४ | सुरेल | - | ०.० | २८७ | ०.० |
| ५ | हायु | २,९२५ | ०.० | १,५२० | ०.० |
| ६ | राजी | ४,२३५ | ०.० | ३,७५८ | ०.० |
| ७ | किसान | १,७३९ | ०.० | १,१७८ | ०.० |
| ८ | लेप्चा | ३,४४५ | ०.० | ७,४९९ | ०.० |
| ९ | मेचे | ४,८६७ | ०.० | ४,३७५ | ०.० |
| १० | कुशबाडिया | ३,१८२ | ०.० | - | ०.० |
| | जम्मा | २१,२८४ | ०.१ | १९,१७५ | ०.१ |

| क्र.सं. | ख.अति सिमान्तीकृत समूह | सङ्ख्या | | | |
|---|---|---|---|---|---|
| | | आदिवासी जनजाति | (%) | मातृ भाषा | (%) |
| १ | माझी | ८३,७२७ | ०.३ | २४,४२२ | ०.१ |
| २ | सियार | - | ०.० | - | ०.० |

| | | | | | |
|---|---|---|---|---|---|
| ३ | ल्होमी (सिङसावा) | १,६१४ | ०.० | ८०८ | ०.० |
| ४ | थुदाम | - | ०.० | - | ०.० |
| ५ | धानुक | २१९,८०८ | ०.८ | - | ०.० |
| ६ | चेपाङ | ६८,३९९ | ०.३ | ४८,४७६ | ०.२ |
| ७ | सतार/सन्थाल | ५१,७३५ | ०.२ | ४९,८५८ | ०.२ |
| ८ | थामी | २८,६७१ | ०.१ | २३,१५१ | ०.१ |
| ९ | झागड | ३७,४२४ | ०.१ | ३३,६५१ | ०.१ |
| १० | वोटे | १०,३९७ | ०.० | ८,७६६ | ०.० |
| ११ | दनुवार | ८४,११५ | ०.३ | ४५,८२१ | ०.२ |
| १२ | बराम | ८,१४० | ०.० | १५५ | ०.० |
| | जम्मा | ५९४,०३० | २.२ | २३५,१०८ | ०.९ |

| क्र.सं. | ग. सीमान्तीकृत समूह | सङ्ख्या | | | |
|---|---|---|---|---|---|
| | | आदिवासी जनजाति | (%) | मातृ भाषा | (%) |
| १ | सुनुवार/कोँइच | ५५,७१२ | ०.२ | ३७,८९८ | ०.१ |
| २ | थारु | १,७३७,४७० | ६.६ | १,५२९,८७५ | ५.८ |
| ३ | तामाङ | १,५३९,८३० | ५.८ | १,३५३,३११ | ५.१ |
| ४ | भुजेल | ११८,६५० | ०.४ | २१,७१५ | ०.१ |
| ५ | कुमाल | १२१,१९६ | ०.५ | १२,२२२ | ०.० |
| ६ | राजवंशी | ११५,२४२ | ०.४ | १२२,२१४ | ०.५ |
| ७ | गन्गाई | ३६,९८८ | ०.१ | ३,६१२ | ०.० |
| ८ | धिमाल | २६,२९८ | ०.१ | १९,३०० | ०.१ |
| ९ | भोटे | १३,३९७ | ०.१ | - | ०.० |
| १० | दराई | १६,७८९ | ०.१ | ११,६७७ | ०.० |
| ११ | ताजपुरिया | १९,२१३ | ०.१ | १८,८११ | ०.१ |

| | | | | | |
|---|---|---|---|---|---|
| १२ | पहरी | १३,६१५ | ०.१ | ३,४५८ | ०.० |
| १३ | तोप्केगोला | १,५२३ | ०.० | - | ०.० |
| १४ | डोल्पो | ४,१०७ | ०.० | १,६६७ | ०.० |
| १५ | फ्री | - | ०.० | - | ०.० |
| १६ | मुगाल | - | ०.० | - | ०.० |
| १७ | लार्के | - | ०.० | - | ०.० |
| १८ | ल्होपा | २,६२४ | ०.० | ३,०२९ | ०.० |
| १९ | दुरा | ५,३९४ | ०.० | २,१५६ | ०.० |
| २० | वालुङ | १,२४९ | ०.० | १,१६९ | ०.० |
| | जम्मा | ३,८२९,२९७ | १४.५ | ३,१४२,११४ | ११.९ |

| क्र.सं. | घ. सुविधा वञ्चित समूह | सङ्ख्या | | | |
|---|---|---|---|---|---|
| | | आदिवासी जनजाति | (%) | मातृ भाषा | (%) |
| १ | गुरुङ्ग | ५२२,६४१ | २.० | ३२५,६२२ | ५.४ |
| २ | मगर | १,८८७,७३३ | ७.१ | ७८८,५३० | १३.१ |
| ३ | राई | ६२०,००४ | २.३ | १५९,११४ | २.६ |
| ४ | लिम्बु | ३८७,३०० | १.५ | ३४३,६०३ | ५.७ |
| ५ | छैरोतन | - | ०.० | - | ०.० |
| ६ | ताङ्बे | - | ०.० | - | ०.० |
| ७ | तीनगाउँले थकाली | - | ०.० | - | ०.० |
| ८ | बाह्रगाउँले | - | ०.० | - | ०.० |
| ९ | मार्फाली थकाली | - | ०.० | - | ०.० |
| १० | शेर्पा | ११२,९४६ | ०.४ | ११४,८३० | १.९ |
| ११ | याक्खा | २४,३३६ | ०.१ | १९,५५८ | ०.३ |
| १२ | छन्त्याल | ११,८१० | ०.० | ४,२८३ | ०.१ |
| १३ | जिरेल | ५,७७४ | ०.० | ४,८२९ | ०.१ |
| १४ | ब्यासी | ३,८९५ | ०.० | ४८० | ०.० |

| | | | | | |
|---|---|---|---|---|---|
| १५ | ह्योल्मो | १०,७५२ | ०.० | १०१७६ | ०.२ |
| | जम्मा | ३,५८७,१९१ | १३.५ | १,७७१,०२५ | २९.४ |
| | | | | | |
| **क्र.सं.** | **ङ. उन्नत समूह** | **सङ्ख्या** | | | |
| | | **आदिवासी जनजाति** | **(%)** | **मातृ भाषा** | **(%)** |
| १ | नेवार | १,३२१,९३३ | ५.० | ८४६,५५७ | १४.१ |
| २ | थकाली | १३,२१५ | ०.० | ५,२४२ | ०.१ |
| | जम्मा | १,३३५,१४८ | ५.० | ८५१,७९९ | १४.२ |
| च | अन्य आदिवासी जनजाति समूह | १,२२८ | ०.० | - | ०.० |
| जम्मा (क+ख+ग+घ+ङ+च) | | ९,३६८,१७८ | ३५.४ | ६,०१९,२२१ | २२.७ |
| | | | | | |
| **सूचीकृत आ.ज. समूह** | | **सङ्ख्या** | | | |
| | | **आदिवासी जनजाति** | **(%)** | **मातृ भाषा** | **(%)** |
| क | लोपोन्मुख समूह | २१,२८४ | ०.१ | १९,१७५ | ०.१ |
| ख | अति सिमान्तीकृत समुह | ५९४,०३० | २.२ | २३५,१०८ | ०.९ |
| ग | सिमान्तीकृत समूह | ३,८२९,२९७ | १४.५ | ३,१४२,११४ | ११.९ |
| घ | सुविधा वञ्चित समूह | ३,५८७,१९१ | १३.५ | १,७७१,०२५ | ६.७ |
| ङ | उन्नत समूह | १,३३५,१४८ | ५.० | ८५१,७९९ | ३.२ |
| च | अन्य आ. ज. समूह | १,२२८ | ०.० | - | ०.० |
| | जम्मा | ९,३६८,१७८ | ३५.४ | ६,०१९,२२१ | २२.७ |
| | कुल जनसङ्ख्या | २६,४९४,५०४ | १००.० | २६,४९४,५०४ | १००.० |

*नेपाल सरकारले २०७७ जेठ ५ मा "रानाथारु" लाई आदिवासी जनजातिको सूचीमा सूचीकृत गरेसँगै आदिवासी जनजातिको सङ्ख्या ६० पुगेको छ ।*

### ६.१.३ बसोवास, रहनसहन र भेषभूषा



नेपालका केही परम्परागत गरगहनाहरू

नेपालको धरातलीय विविधता र हावापानीको विविधताबिच गहिरो र सीधा सम्बन्ध छ । धरातलीय विविधता र हावापानीको विविधताका कारण नै त्यहाँ बस्ने मानिसहरूको बसोवास, रहनसहन र भेषभूषामा पनि विविधता रहेको छ । धरातलीय विभाजनअनुसार तराई, पहाड र हिमालको बसोवास, रहनसहन र भेषभूषामा भएको विविधतालाई तल चर्चा गरिएको छ ।

**हिमाली प्रदेश**



हिमाली भेगमा भारी ओसार्न चौरीगाईको प्रयोग

नेपालको सबैभन्दा उत्तरी क्षेत्रमा हिमाली प्रदेश पर्दछ। वर्षभिरमा आधाजति समय हिउँले ढाकिरहने हुनाले यहाँको भूमि कम उब्जाउशील छ। यहाँ आलु, जौ, उवा, स्याउ आदि जस्ता खाद्यान्न उत्पादन हुन्छन्। यो क्षेत्रमा जनसङ्ख्याको चाप एकदमै कम छ। यो क्षेत्रमा शेर्पा, गुरुङ, भोटे आदि जातिको मुख्य बसोबास भएको पाइन्छ। यहाँ अत्यन्तै जाडो हुने भएकोले कतिपय माानिसहरू पहाडी र तराई जिल्लामा जाडो छल्नका साथै जडीबुटीको व्यापार गरी थप आय आर्जन गर्न जाने गर्दछन्।

यो क्षेत्रमा विकासका पूर्वाधारहरूको खासै विकास नभएकाले यहाँको जीवन एकदमै कष्टकर रहेको छ भने जलवायु परिवर्तनको असरले यो क्षेत्रमा बसोबास गर्ने मानिसहरूको परम्परागत जीवनशैलीमा झनै थप समस्या सिर्जना भएको छ। यस प्रदेशमा बस्नेले बाक्लो प्रकारका लुगा लगाउने गर्दछन्। जस्तो– भोटो, दोचा, बक्खु आदि। यहाँका मानिसहरू विशेषतः जौ, कोदो, फापर, आलु, मासु एवम् यसबाट तयार गरिने परिकार खाने गर्दछन्।

**पहाडी प्रदेश**



दाउराको भारी बोक्दै महिलाहरू

यो क्षेत्रमा पूर्वदेखि पश्चिमसम्म विभिन्न जातजातिका मानिसहरू बस्दछन्। पूर्वी नेपालमा मुख्यतया राई, लिम्बू बस्छन् भने मध्य नेपालमा ब्राह्मण, क्षेत्री, नेवार, मगर, गुरुङ आदि जाति पाइन्छन्। पश्चिममा पनि यिनै जाति जनजातिहरू पाइन्छन्। जात, धर्म अनुसार प्रत्येक समुदायको आआफ्नै भाषा, संस्कृति, रीतिरिवाज रहेको छ। यस प्रदेशमा बसोबास गर्ने मानिसहरूले दौरा, सुरुवाल, कछाड, पटुका, टोपी आदि लगाउने गर्दछन्। यहाँका मानिसहरू मकै, कोदो, दही, दूध, भटमासजस्ता खाद्य वस्तु तथा त्यसबाट तयार गरिएका परिकारहरू खाने गर्दछन्। यस प्रदेशका अधिकांश ठाउँमा यातायात पुगे पनि केही स्थानमा बाटोघाटोको कमी, शिक्षा

तथा सञ्चारजस्ता आधारभूत आवश्यकताको कमीले गर्दा यहाँको जनजीवन पनि कष्टकर नै रहेको छ ।

**तराई प्रदेश**



तराईमा सामान ढुवानी गर्न बैलगाडाको प्रयोग

नेपालको दक्षिणमा तराई प्रदेश पर्दछ । यो क्षेत्र समथर भएकोले यातायातको विकास भएको पाइन्छ । उब्जाउशील जमिन भएकाले यहाँको जनजीवन हिमाली र पहाडी जनजीवनभन्दा सहज रहेको छ । यहाँका मानिसहरूको मुख्य पेशा कृषि हो । यहाँ अलि बढी गर्मी हुनेहुँदा यहाँका मानिसहरू धोती, कुर्ता, लुँगी लगाउने गर्दछन् । यस प्रदेशका मानिसहरूले विशेषत दाल, रोटी, भात, माछा, दही, दूधजस्ता खानेकुरा खाने गरेको पाइन्छ । तराईमा लक्ष्मीपूजा, छठ, सिरूवा पर्व, माघी पर्वहरू धुमधामसँग मनाइन्छ ।

**६.१.४ नेपालका विभिन्न जात जातिहरूको संक्षिप्त परिचय**

नेपाल एक बहुजाति, बहुभाषी, बहुधार्मिक एवम् बहुसांस्कृतिक मुलुक हो । अतः भाषा, संस्कृति, धर्म र जातिको दृष्टिले नेपाल धनी राष्ट्र हो । अनेकता र विविधता नै यहाँको अनौठो र उल्लेखनीय पक्ष हो । नेपालको यही विविधता संरक्षणको आवश्यकता महसुस गरी नेपाल पर्यटन बोर्ड र नेपाल राष्ट्रिय जातीय सङ्ग्रहालयजस्ता सङ्घ-संस्थाहरूले महत्त्वपूर्ण भूमिका खेलिरहेका छन् । नेपालमा रहेका विभिन्न जात जातिमध्ये केही जात जातिको बारेमा निम्नानुसार चर्चा गरिएको छ ।

**बाहुन/क्षेत्री**

प्रजातीय हिसाबले बाहुन/क्षेत्री ककेसियन मूलका मानिन्छन् । जनै धारण गर्ने हुँदा यिनीहरूलाई तागाधारी पनि भनिन्छ । पूर्बिया र कुमाइँ भनेर बाहुनहरूलाई दुई समूहमा विभाजन गरिएको पाइन्छ । यिनीहरू देशका विभिन्न जिल्लामा छरिएर रहेका छन् । पुरेत्याइँ वा कर्मकाण्ड, ज्योतिष हेर्ने काम, खेतीपाती र सरकारी नोकरीमा यिनीहरू बढी संलग्न भएको पाइन्छ । यिनीहरू वैदिक सनातनी हिन्दू धर्म मान्दछन् । बाहुन र क्षत्रीहरूले बोल्ने भाषा भारोपेली समूहको नेपाली भाषा हो जुन देवनागरी लिपिमा लेख्ने गरिन्छ । यिनीहरू आफूलाई खस आर्य भन्न रुचाउँछन् ।

**नेवार**



ईही (बेलविवाह)

काठमाडौँ र उपत्यकाबाहिरका प्रमुख व्यापारिक केन्द्रमा बसोबास गर्ने नेवारलाई आदिवासी जनजातिभित्र गणना गरिन्छ । पेसाका आधारमा ब्राह्मणदेखि सुद्रसम्ममा वर्गीकरण गरिएका यिनीहरूको परम्परागत रूपमा काँचो वा पाकेको इँटा, झिंगटीको छानाद्वारा निर्मित दुई वा तीनतले घरहरू हुन्छन् । यिनीहरूको प्रमुख पेशा व्यापार, कृषि हो । साथै, यिनीहरूले जातीय पेशा अँगालेका छन् । हिन्दु तथा बौद्धधर्म अवलम्बन गर्ने यिनीहरूमा धार्मिक सहिष्णुता रहेको पाइन्छ ।

**मगर**

मगर जाति नेपालको आदिवासी जनजाति हो । यिनीहरूको बसोबास क्षेत्रलाई १२ र १८ मगरात भनिन्छ । जुन मर्स्याङ्दीदेखि दैलेख र डोल्पाको केही भागसम्म फैलिएको छ । राना, थापा, पुन, आले, रोका, घर्ती, बुढाजस्ता सात थरबाट मगरका

अन्य थरहरू बन्न गएका हुन् । कृषि, पशुपालन, खानी खन्ने, हस्तकलाका साथै सुरक्षा क्षेत्रलगायत वैदेशिक रोजगारी यस जातिका मुख्य पेशा हुन् ।

**थारू**

थारू जाति नेपालको आदिवासी जनजातिमध्ये एक हो । थारूको मातृभाषा भारोपेली परिवारमा पर्दछ । यिनीहरूको आदिमभूमि नेपालको शिवालिक शृङ्खला तथा तराई क्षेत्र हो । तराईका केही जिल्लामा थारूजातिको बाहुल्य छ । यिनीहरूको मुख्य पेशा कृषि हो । थारूहरू आफूलाई प्रकृतिपूजक मान्दछन् ।

**तामाङ**

आदिवासी जनजातिमा गणना हुने तामाङको बसोबास क्षेत्रलाई ताम्सालिङ भनिन्छ । यिनीहरू धेरै थरहरूमा विभाजित छन् । यिनीहरूले काठमाडौँ उपत्यका र सो वरिपरिका जिल्लाहरूमा घना रूपमा बसोबास गरेका छन् । पशुपालन, कृषि, थाङ्का र विभिन्न हस्तकलाका सामग्रीहरू निर्माण गर्नु यिनीहरूको मुख्य पेशा हो ।

**राई**

राईहरू आदिवासी किरात वंशका हुन्, जसलाई खम्बू पनि भनिन्छ । नेपालको सोलुखुम्बु, ओखलढुङ्गा, खोटाङ, भोजपुर, सङ्खुवासभा, धनकुटा, इलाम र उदयपुर राईहरूको मुख्य बसोबास क्षेत्र हो । यिनीहरू मुख्यतया धान, कोदो, अलैंची खेती, पशुपालन तथा कागज बनाउने व्यवसाय गर्दछन् ।

**गुरुङ**

नेपालको आदिवासी जनजातिभित्र पर्ने गुरुङ (तमू) जाति देशभित्र र बाहिर छरिएर रहेको पाइए पनि यिनीहरू गण्डकी क्षेत्रका कास्की, लमजुङ, गोरखा र मनाङका रैथाने हुन् र कास्कीको क्होल उनीहरूको पुर्ख्यौली थलो हो । यिनीहरूको पुर्ख्यौली पेशा पशुपालन र कृषि भएता पनि स्वदेशी तथा विदेशी सुरक्षा क्षेत्रलगायत व्यापार र सरकारी सेवामा पनि निकै संलग्न रहेको पाइन्छ । भोट-बर्मेली परिवारअर्न्तगतको तमू भाषा बोल्दछन् ।

**लिम्बू**

नेपालको आदिवासी लिम्बू जाति अरुण नदीपूर्व सङ्खुवासभा, धनकुटा, तेह्रथुम, ताप्लेजुङ, पाँचथर, इलाम, झापा, मोरङ र सुनसरीमा बसोबास गर्दछन् । लिम्बू जातिमा पनि धेरै थरहरू छन् । यिनीहरू कृषि तथा पशुपालन व्यवसाय गर्दछन् । लिम्बूहरू प्रकृति पूजा गर्ने किरात धर्म मान्दछन् ।

**शेर्पा**

शेर्पा जातिको आदिथलो सोलुखुम्बु जिल्लाको उत्तरी क्षेत्रलाई मानिन्छ । शेर्पाहरू देशका विभिन्न हिमाली जिल्लाहरूमा छरिएर रहेका छन् । यिनीहरू पशुपालन र खेतीपाती गर्दछन् । यिनीहरू बौद्धधर्मको महायान सम्प्रदायी हुन् भने यिनीहरूको भाषा भोट-बर्मेली परिवारभित्र पर्दछ । लोसार, डुम्जी, फाङडी ल्होप्सो, यार्ज्याङ,

कङसुर, ढुकपा छेच्यू, ङयुङने, छेच्यू यिनीहरूका प्रमुख चाड हुन् ।

**सुनुवार**

सुनुवार जाति नेपालको आदिवासी मध्येको एक प्रमुख र ऐतिहासिक जाति हो । नेपालको इतिहासमा किरातकालीन राज्य व्यवस्था सञ्चालनदेखि नै किरातिहरूको पहिचान रही आएको छ । सुनुवार किरात वंशको चार शाखा/समुदाय "राई, लिम्बु, सुनुवार र यायोक्खा" मध्येको एक किराती समुदाय हो । खस भाषामा "सुनुवार" र मातृभाषामा "कोँइच" भनिन्छ । नेपालको पूर्वी भूभाग तथा भारतको सिक्किम, दार्जिलिङ क्षेत्रमा मुखिया भनेर चिनिएका छन् ।

प्रकृति तथा पितृ पुजक सुनुवार जाति किरात धर्मावलम्बी हुन् । यिनीहरूको धर्म/दर्शनशास्त्रलाई 'मुक्दुम' भनिन्छ । यस जातिको मूल थाकथलो रामेछाप, ओखलढुङ्गा, दोलखा, सिन्धुली भएपनि हाल मुख्य सहरहरू र नेपालको पूर्वी क्षेत्रमा सघन बस्ती रहेको छ । यस जातिको परम्परागत पेशा सिकार गर्ने, बाँसको कलात्मक सामग्रीहरू बनाउने भएपनि हाल कृषि पेशामा आवद्ध रहेका छन् ।

बैशाख शुक्ल पूर्णिमाको दिन मनाइने श्याँदर पिदार "उँभौली" र मङ्सिर शुक्ल पूर्णिमाको दिन मनाइने श्याँदर पिदार "उँधौली" मुख्य पर्व हो । यस अवसरमा पितृ तथा प्रकृतिको पूजा आराधना गर्दै श्याँदर सिलको आयोजना गरी मनाउने गर्दछन् ।

**चेपाङ**

नेपालको आदिवासी जनजाति चेपाङलाई प्रजा पनि भन्ने गरिन्छ । यिनीहरू चितवन, मकवानपुर, धादिङ, गोरखा, लमजुङ र तनहुँ जिल्लाहरूको भिरालो पाखामा र बाँके, बर्दिया, नवलपरासी, बारा आदि जिल्लाहरूमा समेत बसोबास गर्दछन् । यिनीहरूका धेरैजसो परम्परागत स-साना एकतले खरले छाएका घर हुन्छन् । यिनीहरूको परम्परागत पेशा खोरिया प्रणालीको कृषि व्यवसाय, कन्दमुलको सङ्ग्रह र शिकार हो ।

**उराव (झाँगड)**

नेपालको आदिवासी जनजातिभित्र पर्ने उरावलाई झाँगड पनि भनिन्छ । यिनीहरूको बस्ती पर्सादेखि झापासम्म फैलिएको छ । यिनीहरू ससाना झुपडी बनाएर खोला किनारमा बसोबास गर्दछन् । यिनीहरूको मुख्य व्यवसाय कृषि, मजदुरी, पशुपालन हो भने हस्तकलाका सामग्री ढाकी, पिर्का, गुन्द्री आदि पनि बुन्ने गर्दछन् । यिनीहरूको भाषा द्रविड भाषा समूहमा पर्छ ।

**थामी**

आदिवासी किरात वंशको एक शाखा थामी जाति हो । थामीहरू दोलखा जिल्लाको सुस्पा, राङथली, चिराङथली, सुइतापङ, कालिञ्चोक, लापीलाङ, खोपाचागु, आलम्पु, सिस्कर, बुङथली आदि गाउँमा बसोबास गर्दछन् । यिनीहरू परम्परागत खेती तथा पशुपालन व्यवसाय गर्दछन् । यिनीहरू प्रकृतिपूजक किरात धर्म मान्दछन् ।

**धिमाल**

मङ्गोल मुखाकृतिका आदिवासी जनजातिमा गणना हुने धिमालहरू प्रायजसो झापा र मोरङ जिल्लामा बसोबास गर्दछन् जसलाई तराईका किराती पनि भनिन्छ। यिनीहरूको सखुवाको थाममा बाँस र काठले बनाएको खरले छाएको एकतले घर हुन्छ। यिनीहरू प्रकृतिपूजक हुन्। यिनीहरूको भाषा भोट-बर्मेली परिवारबाट प्रभावित छ। यिनीहरू दसैँ, तिहार, जनैपूर्णिमा, चैते दशैँ, माघे संक्रान्तिलगायत हिन्दू धर्ममा आधारित अन्य चाडवाड मनाउने गर्दछन्।

**थकाली**

नेपालका आदिवासी जनजातिमा गणना हुने थकाली पनि एक हो। थकालीको मूल थलो थासाङ् मुस्ताङ जिल्लाको दक्षिणी सीमाक्षेत्रमा पर्दछ। यिनीहरू हाल विभिन्न जिल्लामा बसोबास गर्दछन्। यिनीहरू आफ्नै भाषा बोल्छन्। यिनीहरूको आफ्नै भेषभूषा तथा गरगहना हुन्छ।

**छन्त्याल**

आदिवासी जनजातिमा गणना हुने छन्त्याल जातिको मूलथलो म्याग्दी जिल्लाको कुइनेमंगले गाँउको भिङ्खानी हो। यिनीहरू बाग्लुङ, पाल्पा, रुकुम, प्युठान, दाङ आदि जिल्लामा पनि बसोबास गर्दछन्। यिनीहरू खाम भाषा बोल्दछन्। पुर्ख्यौली रूपमा खानी खन्ने र प्रशोधन गर्ने भए तापनि यिनीहरूको मुख्य पेशा कृषि र पशुपालन हो।

**राउटे**



राउटे समुदायसँग पूर्वराष्ट्रपति डा. रामवरण यादव

राउटे वनसम्पदामा आधारित नेपालको एकमात्र घुमन्ते जाति हो। यिनीहरू मुख्य रूपमा डोटी, दार्चुला, अछाम, दैलेख, जाजरकोट, कालिकोट तथा सुर्खेतमा बस्छन्। वनदेवी, दारेमस्त तथा भुयार देवता मान्दछन्। यिनीहरू भोटबर्मेली परिवारको

खाम्ची भाषा बोल्दछन् । यिनीहरू एक महिनाभन्दा बढी एकै ठाउँमा कहिल्यै बस्दैनन् र त्यस ठाउँमा फर्केर आउँदैनन् । यिनीहरू अस्थायी रूपमा बस्ने ठाउँलाई राउटी भनिन्छ भने अस्थायी छाप्रालाई थौला भनिन्छ ।

**बाह्रगाउँले**

मंगोल मुखाकृति भएका आदिवासी जनजातिमा गणना हुने एक जाति बाह्रगाउँले पनि हो । यिनीहरू मुस्ताङ जिल्लाको बिच भागका मुक्तिनाथ, कागबेनी, छुसाङ र झोङ गाउँ विकास समितिअन्तर्गतका क्षेत्रमा बसोबास गर्दछन् । यिनीहरूको मुख्य पेशा कृषि, पशुपालन र व्यापार हो । यिनीहरू बौद्ध धर्मालम्बी हुन् ।

**सियार (चुम्बा)**

गोरखाको उत्तरी सीमावर्ती चुमछोच्युक्सम उपत्यकाका छेकम्पार र चुम्चुत गाँउमा चुम्बा जातिको बसोबास छ । उनीहरू ढुङ्गाको गारोमाथि काठ र ढुङ्गाले छाएको घर बनाउँछन् । यिनीहरू परम्परागत रूपमा गहुँ, फापर, केराउ, आलु, तोरीको खेती गर्छन् । यिनीहरू बौद्ध धर्म मान्दछन् ।

**लेप्चा**

लेप्चाहरू इलाम जिल्लाको फिक्कल, रोङ, पशुपतिनगर, गोर्खे, नाम्सालिङ, सामलबुङ र झापा जिल्लाका केही स्थानमा बसोबास गर्दछन् । यिनीहरू प्रकृतिपूजक हुन् भने बौद्ध धर्म मान्दछन् ।

### ६.१.५ नेपालका विभिन्न जातजाति, वर्ग, समुदाय र तिनीहरूको उत्थानका लागि राज्यले गरेका व्यवस्थाहरू

नेपालको संविधानले बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त विशेषतालाई आत्मसात् गरी विविधताबिचको एकता, सामाजिक सांस्कृतिक ऐक्यबद्धता, सहिष्णुता र सद्भावलाई संरक्षण एवम् प्रवर्धन गर्दै; वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैंगिक विभेद र सबै प्रकारका जातीय छुवाछूतको अन्त्य गरी आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने संकल्प गरेको छ। यसका लागि निम्नलिखित संवैधानिक आयोगहरूको व्यवस्था रहेको छ ।

- लोक सेवा आयोग
- निर्वाचन आयोग
- राष्ट्रिय मानव अधिकार आयोग
- राष्ट्रिय प्राकृतिक स्रोत तथा वित्त आयोग
- राष्ट्रिय महिला आयोग
- राष्ट्रिय दलित आयोग
- राष्ट्रिय समावेशी आयोग

- आदिवासी जनजाति आयोग
- मधेसी आयोग
- थारू आयोग
- मुस्लिम आयोग

साथै, नेपालका सबै जातजाति, वर्ग र समुदायको उत्थान गरी सामाजिक न्याय र समानता कायम गर्नका लागि मौलिक हकका रूपमा- समानताको हक, छुवाछुत तथा भेदभाव विरुद्धको हक, धार्मिक स्वतन्त्रताको हक, शोषण विरुद्धको हक, शिक्षा सम्बन्धी हक, भाषा तथा संस्कृतिको हक, दलितको हक, सामाजिक न्यायको हक, सामाजिक सुरक्षाको हकलगायतका विविध व्यवस्था गरिएको छ ।

### ६.१.६ सामाजिक सुरक्षासम्बन्धी व्यवस्था

गरीबी, बेरोजगारी, सामाजिक एवं आर्थिक विषमता, प्राकृतिक प्रकोप, सामाजिक द्वन्द्वलगायतका कारणले समाजमा आश्रयहीन, असहाय व्यक्तिहरूको संख्यामा वृद्धि हुँदै गएको पाइन्छ । बालबालिका, ज्येष्ठ नागरिक, एकल महिला, लोपोन्मुख आदिवासी, जनजाति र अपाङ्गता भएका व्यक्तिहरूसमेतका लागि सामाजिक सुरक्षा भत्ता प्रदान गर्ने गरिएको छ ।

नेपाल सरकारले आ.व. २०७८/७९ को बजेट वक्तव्यमार्फत प्रत्येक विपन्न दलित परिवार र कर्णाली अञ्चलका सबै परिवारका ५ वर्षमुनिका बालबालिकाको पोषणमा खर्च हुने गरी मासिक रू.४०० का दरले बाल संरक्षण अनुदान प्रदान गर्दै आइरहेको मा हाल उक्त अनुदानको रकममा एक तिहाइले बृद्धि गर्ने घोषणा गरेको छ । विभिन्न जिल्लाहरूमा ग्रामीण सामुदायिक पूर्वाधार विकास कार्यक्रममार्फत खाद्यान्न वितरण गरी लाखौँ श्रम दिन बराबरको लाखौं रोजगारी सिर्जना भएको छ । त्यस्तै, प्राथमिक शिक्षा र अत्यावश्यक स्वास्थ्य एंव पोषणसम्बन्धी सेवामा विस्तार भै जनताको पहुँचमा वृद्धि भएको छ। यसै अवधिमा युवा स्वरोजगार कार्यक्रम आरम्भ गरियो। रोजगारीजन्य जोखिमहरूलाई सम्बोधन गर्न सङ्गठित क्षेत्रका कर्मचारी तथा कामदारहरूको पारिश्रमिकमा एक प्रतिशत कर लगाई सामाजिक सुरक्षा कोषको स्थापना गरिएको छ । सामाजिक सुरक्षाका लागि गरिएको प्रमुख कार्यक्रमहरू निम्नानुसार छन् :

(क) ज्येष्ठ नागरिक, एकल महिला, लोपोन्मुख आदिवासी, जनजाति र अपाङ्गता भएका व्यक्तिलाई भत्ता वितरण कार्यक्रम,

(ख) बालसंरक्षण अनुदान कार्यक्रम,

(ग) रोजगारी एवम् स्वरोजगारमूलक कार्यक्रम,

(घ) सामाजिक सुरक्षा कोष र कल्याणकारी कोषहरूको व्यवस्थापन, सुधार र सञ्चालन,

(ङ) कठिन परिस्थितिमा परेकालाई विशेष सहयोग,

(च) सामाजिक सुरक्षाका प्रणालीहरूको सुधार तथा क्षमता विकास कार्यक्रम,

## ६.२ नेपालको सांस्कृतिक जीवन

प्राचीन कालदेखि नै नेपाल विभिन्न धर्म मान्ने मानिसहरूको बसोबास गर्ने थलो हो । नेपालमा मुख्यतया हिन्दू धर्म र बौद्ध धर्मको बाहुल्यता रहेको छ । यी बाहेक इस्लाम, इसाई, किरात, वहाई, शिखलगायत अन्य धर्मावलम्बीहरू पनि उत्तिकै स्वतन्त्र रूपमा रहेका छन् । हिन्दू धर्मअन्तर्गत शैव, वैष्णव, शाक्त, सौर्य आदि सम्प्रदाय पर्दछन् भने बौद्ध धर्ममा हिनयान, महायान, वज्रयान, तन्त्र तथा मन्त्रयान, सहजयान र वोन्पो तथा लामा सम्प्रदाय आदि पर्दछन् ।

यी धर्महरू समयानुसार विभिन्न सम्प्रदाय तथा उपसम्प्रदायमा परिमार्जित हुँदै गएको पाइन्छ । नेपाली समाजमा प्रकृति, पितृ तथा अदृश्य शक्तिको पूजा गर्ने प्रचलन पनि रहेको छ । पश्चिम नेपालमा मस्टो, पूर्वी पहाडमा चण्डी वा देवी, तराईमा संसारीमाई, हिमाली क्षेत्रमा हिन्दूप्रति जनमानसको आस्था र विश्वास रहेको पाइन्छ ।

नेपाल बहुजातीय, बहुभाषिक, बहुधार्मिक एवम् बहुसांस्कृतिक विशेषतायुक्त देश हो । यहाँ सांस्कृतिक विविधताभित्र एकता पाइन्छ । यहाँका विविध संस्कृतिहरूबिच परापूर्वकालदेखि नै अपूर्व मेल रहिआएको छ । सांस्कृतिक बहुलवादको सिद्धान्तबाट सिञ्चित संस्कृति भएकोले यहाँ सांस्कृतिक सम्बन्धको पनि आदानप्रदान भएको पाइन्छ । नेपाललाई साझा संस्कृतिको विकास भएको मुलुक भनी सगौरव भन्न सकिन्छ ।

### ६.२.१ नेपालमा मनाइने प्रमुख जात्रा एवम् चाडपर्व

नेपालमा विभिन्न जातजाति, विभिन्न भाषाभाषी बोल्ने र विभिन्न धर्म मान्ने मानिसहरू बस्दछन् । विभिन्न जातजाति र धर्म मान्ने मानिसहरूका आ-आफ्ना रीतिथिति रहनसहन चालचलनहरूमा पनि विविधता पाइन्छ । नेपालमा मनाइने प्रमुख जात्रा, चाडपर्व एवम् बाजागाजाको बारेमा तल चर्चा गरिएको छ ।

**घोडेजात्रा**

चैत्र कृष्ण चतुर्दशी वा पिचास चतुर्दशीका दिन काठमाडौँमा पाँहाचह्रे वा पासाचन्हे अथवा मित्र चतुर्दशी मनाउने, लुकु माहाद्योको पूजा गर्ने र औंसीका दिनमा उपत्यकामा घोडेजात्रा मनाउने गरिन्छ । यो दिन काठमाडौँको टुँडिखेलमा घोडा दौड समारोह आयोजना गरिन्छ । घोडालाई अनुशासन, शक्ति र तीव्रताको प्रतीकको रूपमा मानिन्छ ।

**गाईजात्रा**

यो पर्व जनैपूर्णिमाको भोलिपल्ट अर्थात भाद्रकृष्ण प्रतिपदाका दिनदेखि सात दिनसम्म मनाइन्छ । छोरा चक्रवर्तेन्द्र मल्लको मृत्युपछि शोकग्रस्त रानीलाई खुसी पार्न राजा प्रताप मल्लले पहिलो पटक गाईजात्राको आयोजना गरेका र यसमा रानीको शोकहरण भएको किंवदन्ती छ । यसमा खड्गजात्रा, रोपाइजात्रा, लाखेनाच, षडदर्शन ख्याली,



गाईजात्राको झलक, भक्तपुर

लोकनृत्य, डवलीनृत्य, नाटक आदि प्रदर्शन गरिन्छ । श्रीकृष्ण जन्माष्टमीको दिन कृष्ण जात्रा गरेपछि भगवान कृष्णले राक्षस, भूत-प्रेत आदि नाश गरेको आधारमा भूत-पिचास, नागको भय हुँदैन भन्ने जनविश्वास छ ।

**दसैँ**

आश्विन महिनाको शुक्ल प्रतिपदादेखि दशमीसम्म १० दिन पर्यन्त चल्ने भएको हुँदा वा दशमीलाई विशेष महत्त्व दिएकोले यसको नाम दशैं रहन गएको अनुमान गर्न सकिन्छ । यस पर्वलाई नेपालको राष्ट्रिय पर्वको रूपमा मनाइन्छ । मान्यजनको आशीर्वाद, निधारभिर टीका, कपाल र कानमा जमरा, गलामा विभिन्न किसिमका मालाहरू दशैं पर्वका विशेषता हुन् । यस पर्वमा नौ दिनसम्म देवीका विभिन्न रूपको पूजा अर्चना, फूलपाती महोत्सव आदि कार्यक्रमहरू गरिन्छ ।

**महाशिवरात्री**

प्रत्येक वर्ष फागुन कृष्ण चतुर्दशीको दिन पर्ने यो दिन काठमाडौँको पशुपतिनाथको मन्दिरमा र अन्यन्त्र स्थापित शिवालयहरूमा श्रद्धालु भक्तजनहरूको ठुलो जमघट हुन्छ । महाशिवरात्रीका दिन नेपालमा सैनिक दिवस पनि मनाइन्छ ।

**चैते दशैँ**

चैत शुक्ल अष्टमीका दिन मनाइने यो पर्वलाई सानो दशैं पनि भनिन्छ । लमजुङ् जिल्लामा दुरा जातिले यो पर्व विशेष धुमधामका साथ मनाउँछन् । यस दिन मच्छिन्द्र नाथको रथयात्रा गरिन्छ ।

**बुद्ध जयन्ती**



बुद्धजन्म फलक, लुम्बिनी

इसापूर्व ५६३ मा वैशाख शुक्ल पूर्णिमाका दिन बुद्धको जन्म भएको, वैशाख शुक्ल पूर्णिमाकै दिन बुद्धत्व प्राप्त गरेको र इसापूर्व ४८३ मा वैशाख शुक्ल पूर्णिमाकै दिन महापरिनिर्वाण प्राप्त गरेकोले 'वैशाख शुक्ल पूर्णिमा (स्वाँया पुन्हिं)' बुद्ध जयन्तीका रूपमा मुलुकभर मनाइन्छ । यस दिन बौद्ध मठ, गुम्बा एवम् विहारहरूमा ठुलो जमघट हुन्छ ।

**तिहार**

कात्तिक कृष्ण त्रयोदशीदेखि ५ दिनसम्म मनाइने यो पर्व दाजुभाइ, दिदी बहिनीहरूको स्नेह र शुभेच्छाको पर्व हो । यी ५ दिन यमराज आफ्नी बहिनी यमुनाकहाँ आई बसेको र यमुनाले उनको सेवा र पूजा गरेको घटनालाई यससँग आबद्ध गरी यो ५ दिनलाई यमपञ्चक पनि भन्ने गरिन्छ । यस पर्वमा काग, कुकुर, लक्ष्मी, गाई गोरुको पूजा गर्दै अन्तिम दिन भाइ पूजा गर्ने गरिन्छ । यस दिन दिदी बहिनीहरूले आफ्ना दाजुभाइहरूको सुख समृद्धि र दीर्घायुको कामना गर्दै टीका लगाई मिष्ठान्न खुवाउने गर्दछन् । यस अवसरमा भैलो तथा देउसी खेली मनोरञ्जन गरिन्छ ।

**तीज**



तीजमा रमाउँदै व्रतालु महिलाहरू

